# अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज
# बेलायत च्याप्टर

## वर्तमान कार्यसमिति गठन १३ जुलाई २००८



हरि शिवाकोटी
(अध्यक्ष)



नीला अधिकारी
(प्रथम उपाध्यक्ष)



गोपीकृष्ण प्रसाई
(द्वितीय उपाध्यक्ष)



गणेश राई
(तृतीय उपाध्यक्ष)



विश्वासदीप तिगेला
(महासचिव)



केदार सुनुवार
(सदस्य)



मञ्जु विमली
(सदस्य)



जया राई
(सदस्य)



मिजास तेम्बे
(सदस्य)

# झझल्को

(अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, बेलायत च्याप्टरको प्रथम प्रकाशन)

# Jhajhalko

(A magazine of International Nepali Literature Society, UK Chapter)


सल्लाहकार

**मुरारीराज शर्मा**

(संयुक्त राष्ट्रसङ्घका पूर्वस्थायी प्रतिनिधि)

**सुरेशराज चालिसे**

(बेलायतका लागि नेपाली राजदूत)

प्रधानसम्पादक

**हरि शिवाकोटी**

सम्पादक

**नीला अधिकारी**

**विश्वासदीप तिगेला**

**गोपीकृष्ण प्रसाई**

प्रकाशक

अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज,

बेलायत च्याप्टर

प्रकाशन-मिति: ०६७ असोज

कम्प्युटर : शब्दघर


## यस अङ्कमा




शब्दघर अफसेट प्रेस, बागबजार, काठमाडौं, फोनः ०१-४२४४५९७ द्वारा मुद्रित

# सम्पादकीय

आफू जन्मेको माटो र आफ्नो देश स्वर्गभन्दा प्यारो हुन्छ भन्ने महान् वाणीको महान् आशयको निरन्तरता हो 'झझल्को' नामक यो INLS बेलायत च्याप्टरको कोसेली, जो अहिले नै तपाईंहरूको हातमा छ ।

नेपाली साहित्यको विकास, प्रवर्द्धन र संरक्षणका खातिर संसारको कुनै कुनामा रहे पनि नेपालीले भुल्न सक्दैनन्, बरु एकदुई सिँढी थप्ने प्रयत्नचाहिँ निरन्तर गरिरहन्छन् । आफ्नो पेट काटेर भए पनि उभारेको सञ्चित रकमले बेलायत च्याप्टरले साहित्यको बीज रोप्न सक्यो । यो प्रयासका लागि हालको बेलायत च्याप्टरका सम्पूर्ण पदाधिकारी साथीहरूको महत्त्वपूर्ण भूमिका रहेको छ ।

अनेसासका संस्थापक होमनाथ सुवेदीज्यूले शुभकामना तथा श्रष्टाहरूले आ-आफ्नो लेखरचना यो झझल्कोमा प्रकाशन गर्न दिनुभएकामा हार्दिक आभारसहित शब्दघर अपसेटका प्रबन्ध निर्देशक प्रोल्लास सिन्धुलीयलाई सम्पादन प्रक्रियामा साँच्चैको सहयोगका लागि धन्यवादसहित झझल्कोका पाठक महानुभावहरूबाट यथोचित मार्गदर्शन र सुझाव प्राप्त हुने कुरामा हामी आशावादी छौँ ।

**हरि शिवाकोटी**
अध्यक्ष
अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज
यूके च्याप्टर, बेलायत

# शुभकामना-सन्देश

होमनाथ सुवेदी

(अध्यक्ष, अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, वाशिङ्गटन डी.सी., संयुक्त राज्य अमेरिका)

अन्तर्राष्ट्रिय **नेपाली** साहित्य समाज, **बेलायतको** आयोजनामा देवकोटाको जन्मको सय वर्ष पुरेर भएको यो बेलायत नेपाली साहित्य महोत्सवमा सर्वप्रथम म देवकोटाप्रति श्रद्धाञ्जली अर्पण गर्दछु र आजको यस सभाका प्रमुख अतिथि कथाकार मुरारीराज शर्मा, विशेष अतिथि समालोचक कृष्णचन्द्रसिंह प्रधान तथा अन्य सहभागीहरू साहित्यानुरागीहरूमा स्वागत अभिवादन !

यद्यपि व्यक्तिगत रूपमा प्रवासी, परदेशीआदिका रूपमा पहिले पनि लेख्ने काम भइरहेका थिए, तापनि संस्थागत रूपमा डायस्पोरिक साहित्यको नौलो स्वर बोकेर लेख्ने लेखाउने डायास्पोरामा स्थापना भएको अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, केन्द्र सबभन्दा पहिलो र ठूलो संस्था हो । सन् १९९० मा स्थापना भै ऐलेसम्म विभिन्न राष्ट्रमा पचास वटा केन्द्रको स्थापना भैसकेका छन् । यसले नेपाली डायास्पोरामा नेपाली पहिचानलाई दिगो राख्न यथासम्भव प्रयत्न गरेको छ । डिल्लीराम तिमसिना पुरस्कार, गोपाल पाँडे असीम पुरस्कार आदिले यसको सफलताको मूल्याङ्कन गरेको देखिएको छ । यसको गति र क्षेत्र भनेको इन्टरनेट हो, डायास्पोरा हो, जहाँ पुग्न र भिज्न नेपालका विद्वान्हरूलाई प्रशस्त असुविधाहरू छन् र उनीहरूले अझ यसको मूल्याङ्कन गर्न सकेका छैनन् तर ऐले भर्खर आएर सबैको आँखा खुलेको देखिएको छ । अनेसासले डायास्पोराबाट गरेको नेपाली भाषा र साहित्यको योगदानको मूल्याङ्कन हुन थालेको छ । यो सफलताका पछाडि तपाईंहरू र तपाईंहरूले खोलेका संस्थाहरूको योगदान रहेको छ । अनेसासभित्र वा बाहिर जहाँबाट पनि नेपाली डायास्पोराको सेवामा समर्पित हुने प्रत्येक व्यक्ति तपाईंहाम्रो गौरव हुन् । त्यस्ता तपाईंहरूबाट निरन्तर गरिएको निःस्वार्थ सेवाले सेवालाई पवित्र बनाउँछ र आत्मसन्तोष दिन्छ । सायद जीवनको अन्तिम अर्थ पनि आत्मसन्तोष नै हो ।

'अनेकतामा एकता नेपालीको विशेषता' को मूल मर्मलाई आत्मसात गर्दै बेलायत (यू.के.) भरि छरिएर रहेका नेपालीलाई एकताबद्ध गरी नेपाली भाषा, साहित्य, संस्कृति र कलाको जगेर्ना, सम्बर्द्धन र विकास गर्ने हेतुले फेब्रुअरी ६, २००४ का दिन अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, यू.के. च्याप्टरको स्थापना गरिएको थियो । यस्तो अवस्थामा हरिजी तथा विश्वासजी जस्ता उत्साही साहित्यसेवीहरूबाट यो संस्था पुनर्जीवित गरियो र गत जुलाईको भेलाले १९५ औं भानु जयन्ती मनाउनुका साथै अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज बेलायतको २३ सदस्यीय नयाँ कार्यसमिति पनि निर्माण गर्‍यो । तदनुसार अध्यक्ष हरि शिवाकोटी, उपाध्यक्ष श्रीमती नीला अधिकारी, दोस्रो उपाध्यक्ष गोपीकृष्ण प्रसाई, तेस्रो उपाध्यक्ष गणेश राई, महासचिव विश्वासदीप तिगेला, सचिव नवराज राई, सहसचिव नवराज भट्टराई, कोषाध्यक्ष विदुर सिटौला र सदस्यहरू दूत पुन, दयाकृष्ण राई, टङ्क बनेम, शिवजी श्रेष्ठ, जगत नवोदित, केदार सुनुवार, मञ्जु विमली, जया राई, हरि गुरुङ, मिजास तेम्बे, जितेन्द्र चेम्जोङ, पोषणराज सत्याल, योगराज राई , रामकृष्ण सुनुवार रहनुभएको छ । त्यस्तै गरी कानुनी सल्लाहकार चण्डिका राई र सल्लाहकारहरूमा मिनिस्टर काउन्सिलर भविन्द्रप्रसाद अर्याल, डा. चन्द्र गुरुङ, धन गुरुङ (फक्स्टोन काउन्सिलर), नरेन्द्र कँडेल, सुरेशजङ्ग शाह, गोपाल शिवाकोटी 'चिन्तन' सहितको यो नयाँ कार्यसमितिको काम थोरै नै दिनमा सराहनीय देखिएको छ ।

अनेसासका ५० वटा केन्द्रले बेलायतको अनेसासको कदमलाई नमुना मान्न सक्ने प्रतिमान कायम गर्न तपाईंहरूलाई सफलता मिलोस् । अनेसास केन्द्रको डायास्पोरिक साहित्य निर्माण आन्दोलनको कदममा कदम बढाएर लक्ष्य प्राप्तिमा तपाईंहरूलाई सफलता मिलोस् भन्दै आज यस महोत्सवमा विजयी पुरस्कृत सबैलाई बधाई दिँदै मेरो शुभकामना-सन्देश यहीं अन्त्य गर्दछु ।

**(अनेसास बेलायत च्याप्टरको कार्यक्रमको सन्दर्भमा प्रस्तुत वक्तव्य)**

# कविता

ईश्वर मानन्धर
यू.के. लण्डन

## ब्रह्माले सृष्टि गरेको विश्व

ब्रह्माले सृष्टि गरेको यो विश्वमा
शान्ति थियो नै कहिले
आज शान्ति-शान्ति भन्छौ ?
असुर-दानव र देउतासँग युद्ध
देउता-देउताहरूबीच नै सङ्घर्ष
दक्ष प्रजापतिको महायज्ञको दुष्परिणाम
कंसको अत्याचारको दमन
स्वर्णीम लङ्काको दहन
महाभारतजस्तो प्रलयकारी युद्ध
गाण्डिव धनु र सुदर्शन चक्रको सट्टा
अणु र परमाणुबमको युद्ध
हिरोसिमा, कम्बोडिया र
भियतनामको युद्ध
विगतका इतिहासले प्रस्ट्याएका छन्
विश्वमा शान्ति थियो नै कहिले
आज शान्ति-शान्ति भन्छौ ?
विश्वको मानचित्र पल्टाइ हेर
जतातते अशान्ति, असुरक्षा
आतङ्क, अतिक्रमण र अपहरण
दिनप्रतिदिन बढ्दै गइरहेका छन्
आत्मघाती बमका शिकार भइरहेका छन्
कति असहाय र अबला नारीका
सिउँदोका सिन्दूर पुछिएका छन्
सौभाग्यका प्रतीक चुराहरू
तिलहरी र पोतेहरू लुटिएका छन्
कति घरबाट बिहानी भागिरहेका छन्
वयोवृद्धाका सहारा, भविष्यका सीता
अकारण मृत्युको शिकार भइरहेका छन्
कति शिशुहरू मातृविहीन भइरहेका छन्
असुरक्षा, आतंक, अपहरण
र त्रासको
धारिलो मार्ग भई जीवन
गुजारिरहेका छन्
अशान्तिका ज्वाला अझै
दन्किरहेका छन्
यो विश्वमा शान्ति थियो नै कहिले
र आज शान्ति-शान्ति भन्छौ ?

यस जगत्मा बाँच्न चाहन्छौ भने
समय, काल, परिस्थितिसँग
सम्झौता गर
त्यही ढाँचामा आफूलाई ढाल्न सिक
निर्भय र निर्भीक भई बाँच्न सिक
सुख-शान्तिको परिकल्पना नगर
वर्तमान प्रदूषित र निरर्थक
भइसकेको छ
विगतलाई व्यर्थ
अब आलिङ्गन नगर !
००

# गीत

कल्पना खड्का
सालु-४, रामेछाप,
हाल-जैसीदेवल, काठमाडौं



तिमी आउँछौ सपनीमा नयाँनौलो ठाउँमा
सिङ्गै रात सिध्याउँछु हरपल तिम्रै नाममा
अँधेरी यो रातमा माया, आउँछ तिम्रो छाया
मेरो हुन्थ्यौ दायाँबायाँ, दिनमा होस् या रातमा

कैले मलाई लिन आउँछौ कहिले आफैं जान्छु
तिमीलाई पाउने भए जे नै कसम खान्छु
किन लाग्छ माया मलाई तिम्रो अधरको
किन आउँछ छायाँ तिम्रो हरपल मुहारको

पियास तिम्रो पानीमुनि छाँगा-छहरामा
पीरतिको गीत गाउँदै हिँड्छौ पहरामा
बाँसुरीको स्वरसँगै हार्मोनियमको हारभित्र
कोरेको छु मायालुको तस्बिर मुटुभित्र

तिमी आउँछौ सपनीमा नयाँनौलो ठाउँमा
मेरो हुन्थ्यौ दायाँबायाँ दिनमा होस् या रातमा ।
००

# अनुहार बदलिएको लण्डन र ज्याकी स्मिथहरू

मनोज राई

इस्टहाम, लण्डन

लण्डनको रात्रि सडकमा
झलमल्ल प्रकाशले नुहाउँदै
ज्याकी स्मिथ एक्लै निर्धक्क हिँड्न डराइरहेको समय
म कुनै अफ्रिकी राष्ट्रमा छु
या भारतीय उपमहाद्वीपमा छु
शेक्सपियरको ह्यामलेटमा भएको हुँदो हुँ त
आफ्नै राजधानी शहरका सडकसँग भयभीत
आफ्नै सत्तामा असुरक्षित ठान्ने ज्याकी स्मिथहरूझैं
आफ्नै पाइलाप्रति सन्दिग्ध नहुनुपर्ने म
सायद म यहीं कतै छु स्टोनह्यान्ज उभिएको ।

अनुहार बदलिएको छ, लण्डनको
थपिएको छ रङ्गहरूको बहुलतासँगै आयतन
र फेरिएको छ समाजशास्त्रका पुरातन परिभाषा
भिक्टोरियाकालीन कन्जरभेटिभ मस्तिष्कलाई ध्वस्त पार्न
पूर्वपश्चिम, उत्तरदक्षिण चारैतिरबाट इपिसेन्टर पारेर
ग्लोबलाइजेसनको नवीन कन्टेनरभित्र
प्याकेटका प्याकेट बहुरङ्गी
सामान भन्सार सुविधामा भित्रिएजस्तो
अन्तर्राष्ट्रियवादको कण्डम ओढेर पसेका
बहुसांस्कृतिक आप्रवासी मान्छेहरू
लण्डनका चिल्ला सडकका त्रासदी हुन् सायद
ज्याकी स्मिथहरूको ठम्याइमा ।

अँध्यारो अफ्रिका जरै उखेलिइ आएजस्तो
पूर्वी युरोपका सबै साम्यवादी यहीं थुप्रेजस्तो
मानौं भारतीयले आफूसँग सम्पूर्ण छिमेकी साथै ल्याएजस्तो
या क्यारिबियनमा बाँकी कोही नरहेजस्तो
डीभीडी बेच्दैबेच्दै बेइजिङको फुटपाथमा
डिभिडीसँगै चिनियाँ भित्रिएजस्तो
न्यूटनको घुरेनमा स्याउ खस्तैन आजकाल
गुरुत्वाकर्षण शक्तिले
बदलामा मोहमद अल कायदाका बुलेट जस्ता
अचूक आरोपहरू बज्रन थालेका छन्
बकिङघम दरबारको इम्पेरियलकालीन अहङ्कारविरुद्ध ।

**बर्लिनको पर्खाल ढालिनु होइन खडा हुनुभन्दा धेरै पहिले**
**ग्लोबलाइजेसनको वीर्य**
**साम्राज्यवादी योनीभित्र स्खलित हुनुभन्दा अझ धेरै पहिले**
**शीतकालीन विश्व अथवा नाजी बर्बरताभन्दा युगौं पहिले**
**ओटोम्यान इम्पायर या रोमन सभ्यता फैलिएजस्तो प्राचीन**
**म यही थिएँ ह्यामलेट् बस्तीमा बाँचिरहेको जीवन ।**

म यहीं थिएँ शेक्सपियरको सृजनाको नायक
एभन नदीको तीरैतीर
महारानीको सेतो श्वान (हाँस) तैरिएजस्तो
तैरिइरहेथें म युफ्रेट्स नदीको किनारमा गतिशील जीवन
म यहीं थिएँ

ज्याकी स्मिथहरूका पुर्खालाई सुरक्षाको अनुभूति दिलाउन
म यहीं थिएँ ज्याकी स्मिथहरूका साम्राज्यमा सूर्यास्त रोक्न
इतिहास नपढेजस्तो छ ज्याकी स्मिथहरूले
आफ्नो साम्राज्य निर्माणको
या इतिहास बिर्सेका स्वाङ पारेका हुन् ज्याकी स्मिथहरूले !

वाटर लुको युद्ध जितेर पनि
नेल्सनले जीवनको बाजी हारेजस्तो समयको क्रुरता
ओलिवर क्रमवेलजस्तो निरङ्कुश सत्ताको पदचाप
बहुमूल्य सूचनाको डाटा चोरिएको वर्तमान
ज्वालामुखी जस्तो निर्दयी समयले डामेर पनि मौन
म यहीं कतै छु थेम्स नदी बगेजस्तो शान्त
म यहीं कतै उभिएको छु अवश्य
अलिखित संविधानका लिखित हरफहरूमा

मिसाइल सम्भोग गरेर युद्ध जन्माउने ज्याकी स्मिथहरू
ह्याम्लेट चिरेर बग्ने म हरियो एभन नदीजस्तो मान्छे
अध्यागमनका पखेटाहरू छिनालेर
विजयोल्लासमा ग्रीनबीच घडीको लिङ्ग
स्याम्पेनले नुहाउँदै ज्याकी स्मिथहरू
मुट्ठीभित्र पेचकिला ठोक्न खोज्छन् तेन्जिङ पाइलालाई
ग्लोबलाइजेसनको बहुरङ्गी प्याकेट हुनुपर्छ त्यो अवश्य पनि
त्यहीं ठिङ्ग उभिएको वेस्टमिन्स्टर सडकमा
ज्याकी स्मिथहरू क्याटवाक गर्ने लण्डनको व्यस्त सडकमा
अलिस्टर डार्लिङ्गनहरू कोरियोग्राफीमा व्यस्त रहने सदनमा
कहाँबाट आयो यो आदिम इतिहास उभिन ?
कहाँबाट आए इन्द्रेणीजस्ता यी मान्छेका हुल ?
म यहीं नै छु इतिहास उभिएको
म यहीं नै छु ह्यामलेटको छातीमा स्टोनह्यान्ज ठडिएको ।

# मैले आज बिहानै देवकोटालाई भेटें

गोपीकृष्ण प्रसाई
लण्डन, यू.के.



आँखाहरू उघारी हेरें
मन अमिलो थियो
कहाँ बल्नु मनमा आशाको दीयो ?
यो प्रतिस्पर्धीको दुनियाँमा
म तेस्रो विश्वबाट आएको परदेशी
मानिसहरू तँछाडमछाड गरेर कुदिरहेका छन् यहाँ
यो लण्डन शहर हो
कसैलाई कुरा गर्ने फुर्सद छैन
कसैलाई कसैको मतलब छैन
यन्त्रवत् !
मानिसहरू काम गरिरहेछन्
सम्पूर्ण प्रविधिको संसार
भावनाहरू कतै थला परिरहेछन्
प्रकृतिलाई निमन्त्रण गर्ने धूनमा
वैज्ञानिकहरू जाग्दै छन्
दुःखी आत्माहरू
प्रकृतिका पुजारीहरू
यो कोलाहल र औद्योगिक युगबाट
कतै शान्त परिवेशमा भाग्दै छन्।

पृथ्वीले जन्म पनि दियो
जीवहरू फस्टाइरहे
जीवको उत्पत्ति अनि करौडौं वर्षको इतिहास
हामी रामपिथेकसका सन्तान
यस्तैयस्तै अनगिन्ति प्रश्नहरू बोकेर
हिउँदको मन्दमन्द घाममा आफ्नो पुर्पुरो सेकिरहेछु
अनियन्त्रित भीडले न कसैलाई हेर्छ
यी अनगिन्ति सवालहरूमा उभिन्छ मेरो कन्चनजङ्घा
अनि नागी र घुम्ती डाँडाहरू
मेरो घर, खेत देखिन्छ
मेरो वनपाखा भेटिन्छ
मृगका बच्चाहरू नाचिरहेछन्
गाईवस्तुहरू भीरपाखामा चरिरहेछन्
गोठालाहरू मुरली बजाइरहेछन्
घाँसीहरू घाँसको भारी बोकेर
दाउरेहरू विरहको चिसो स्याँठमा खोकेर
ओरोलो झरिरहेछन्।

यस्तो दुनियाँमा देवकोटा गीत गाइरहेका हुन्छन्
गाउँले दाजुभाइसँग हात मिलाइरहेका हुन्छन्
पसिनाको रामकहानी
देवकोटाले पनि कठोर सङ्घर्ष गरे
नेपालीहरूकै उपन्यासमा आफ्ना भोगाइहरू खर्च गरे
जागरणको बिगुल फुके
मनका मूर्च्छनाहरू कतै बस्तीबस्तीमा दुखे
हिमाल-पहाड अनि तराई उनका शब्दहरूसँग झङ्कृत भए
देवकोटाका अमर साङ्गीतिक कोसेली
देश-विदेश खानाझैं गए।

आज म बेलायतमा छु
उनको क्रन्दन आज पनि सुनिरहेछु
नयाँ नेपाल बनिएको छ
गाउँगाउँमा नयाँ बाटो खनिएको छ
दासताको जन्जीर टुटेको वर्तमान
उनी राजनीतिक उथलपुथल
देशको माहौल परिवर्तन भएको छ
हुकुमी युगले शिर निहुर्‍याएको छ।

देवकोटाको सुन्दर शान्त र विशाल नेपाल
सभ्य, सुसंस्कृत र वैभवशाली जाति

एकपल्ट म पुलकित हुन पुग्छु
उनका अमृत वाणीहरू
नेपाली हुनुको गर्भमा
कता-कता कल्पनामै म
हिमाल छुन पुग्छु।

देवकोटाले क्रान्तिको बिगुल फुके
जागरणको शङ्खघोष गरे
आजको नयाँ नेपाल बनाउन
उनले पनि धेरैधेरै कसरत गरे
बौद्धिक कसरत
उनलाई पागल देख्ने समाजलाई
गतिलो झापड दिए
शब्दमा रमाउने देवकोटा
शब्दमा खेल्ने देवकोटा।

एक कलाशिल्पी
मुनामदनका रचनाकार
झ्याउरे शैली र हाम्रो गाउँले जीवन
व्यथा र जीउनुसँगको तादाम्यता
कस्तो उच्छ्वास छ जीवनको
नर र नारी अनि एउटा
पारिवारिक बन्धनमा
कस्तो आशा हुन्छ बिहानको
हिमाली बस्ती, पहाडी बस्ती
दुःखको सागरमा पौडेर
लेखेको यो मुनामदन यसैमा भेटिन्छ
नेपालीहरूको यथार्थ जीवन।

नेपाली साहित्यलाई विश्व रंगमञ्चमा
पुऱ्याउने ती देवकोटा
पन्त, प्रसाद र निरालाका एउटै रूप
हाम्रा महाकवि देवकोटा
कहिले दुःखीहरूलाई
कपडा बाँडिहिँड्छन्
कहिले भोकाहरूलाई खाना जुटाइदिन्छन्
आफू मरेर, आफू जलेर
अरूको हाँसो हेर्ने उनी
लोभीपापी नेताहरू, घातक मान्छेहरूको
सदैव विरोध गर्ने उनी
उनी त सङ्घर्ष गर्दागर्दै ऋणमा डुबीमरे
भन्दाभन्दै जीवनमा क्यान्सर लागेर मरे

एउटा विडम्वनापूर्ण जीवन
नेपालको राजनीतिक परिवेश अनि
छरिएरका भावनाहरू यत्रतत्र
एकसरो लाउन अनि
एक छाक खानाका लागि
जीवनमृत्युसँग पौंठाजोरी खेलिरहेछन्
अर्कोतिर
महलका जवानीहरू नाचिरहेछन्
मान्छेकै रगत खान पल्केर
कालझैं हाँसिरहेछन्।

धपधपी बल्छ पेट्रोलियम पदार्थ
देखिरहन्छन् आगोका मुस्लोमा पनि
जीवनको शब्दचित्र
फुट्नै खोज्छ छाती चिरिएर
यो ज्वालामुखी
संघर्षको जीवन
सन्देशवाहक जीवन
देवकोटा सारा नेपालीहरूका
धड्कन हुन्
विश्वसाहित्यमा
नेपाली साहित्य पनि छ
किट्स वर्डसपर्थ र टोलीजस्तै
यी पनि अमर छन्
नेपाली साहित्यका सगरमाथा देवकोटा
मानवतावादी, परोपकारी
महामानव देवकोटा।

# कसरी जाँदै छौं

चेतनाथ धमला
ओखलढुङ्गा, हाल काठमाडौं

अनुहारभरि
कोत्रैकोत्रा परेको यो खाल्डो घेर्न
रातो कफन गुथेर
दुर्गमबाट पाहुनाझैं आएका होइनौं
हामी कुनै लाहुर आएका होइनौं

फर्किंदा
उही लेकाली डोकोभरि
विश्वासको पहाड उभ्याएर जानेछौं
सम्साँझै हराएका
सपनाहरू लिएर जानेछौं

दुर्गमबाट झर्दा
हवाईचप्पल लाएर आएका थियौं
एक फेरो कपडाले ढाकिएर आएका थियौं
तर हामी घर फर्किंदा
गर्वले भरिएको
विश्वासले जितेको
छाती फुलाएर फर्किंदै छौं

उडुसझैं
कर्तुतले जिएकाहरूलाई
सबक सिकाएर
घर जाँदै छौं
रातो झन्डा फरफराउँदै
सधैं शिर उठाइरहनेछौं।

(कवि कौशिकी द्वैमासिकका सम्पादक हुनुहुन्छ।)

# तीन कविता

भोजराज बराल

**बेलायत**

धेरै फड्को मारियो
तर बेलायतको बास
जति ठोसे पनि नबल्ने
चिलाउनेको ठूटो भो
नाती-पनाती पाउँदासम्म पनि
हातमुख जोर्न नाचिरहनुपर्ने
लाजै पचाएको रत्यौलीको लूठो भो।

**पर्खाइ**

एक्लै निदाउन नसकेका
कृष्णपक्षका रातहरू
ओठ जोडेर बिताएका
कल्पनाका साथहरू
जिन्दगी आसैआसमा पर्खेर बित्यो
तैपनि निर्लज्ज किन पर्खिरहन्छ्यौ
मलम लगाउनै नभ्याइने घातहरू
मलम लगाउनै नभ्याइने घातहरू।

**देश विकास**

बाख्रा चराउन बले अरब
डाक्टर विदेश कमाउन खरब
पढ्ने निहुँमा विद्यार्थी विदेश
देशमा रह्यो कस्तो शेष
भीसा पाउने सबै पलायन
नेपालको विकास पनि
'विदेश' पलायन।

# यो मन

मञ्जु विमली
आठराई, तेह्रथुम, हाल काठमाडौँ



कसरी व्यक्त गरौं यो मनको बखान खै !
घरीघरी पिरोलेर बनाउँछ हैरान नै
नदेख्न सकिन्छ, न त गर्न स्पर्श नै
न रंग, रूप छ, न आकार, यो मन साँच्चै अचम्मकै।

बोक्न सजिलो छ त्यत्तिकै चोर्न पनि मन
लोभी नजरको सहारामा सौन्दर्य चुम्ने पापी मन
परेलीमा उनेर कल्पनामा डुब्छ सजिलो गरी मन
कसैले बुझ्नै सक्तैन कति गोप्य छ यो मन।

सयमको पङ्खा हालेका, कसैले बाहन सक्तैन यो मन
कसैको अधीनमा छैन सर्वत्र अनियन्त्रित छ यो मन
जे चाहन्छ मन् पर्दा गर्छ छाडा साँढे नै हो यो मन
बोल्नुपर्दैन मुखले आफैंभित्र कुरा गरिरहन्छ यो मन

सागरभन्दा गहिरो माया बसाउन सक्छ यो मन
तिमीसँग मिल्ने यसबाहेक के नै छ र? पनि भन्छ यो मन
अन्जानमै नाता गाँसी अनन्त कसम तोड्न पनि सक्छ यो मन
भर छैन, छिन्मै बाँधिन र छिन्न पनि सक्छ यो मन॥

आकाशभन्दा माथिसम्म उड्न र झर्न सक्छ यो मन
क्षणमै बदलिइ आफ्नो डेरा सर्न पनि सक्छ यो मन
स्वार्थी छ साँच्चै ! नफुलेको बागमा पनि हरियाली खोज्छ यो मन
शङ्कैशङ्कामा दोषी भए पनि प्रेमको भूललाई माफी दिन्छ यो मन॥

# मित्रताको आकाश

मातृका पोखरेल
काठमाडौँ

उसको र मेरो बीच
ओजोन तहभ्रैं ढाकिएको छ
अविश्वासको बादल

ऊ सडकमा बालिएका
बत्तीहरू फुटाल्न
बोकिरहन्छ गोजीमा ढुङ्गाहरू
र ऊ अँध्यारो रातभ्रैं
हुर्काउन चाहन्छ शहरलाई,
मैले सडकबत्तीको विरुद्धमा
ऊ सँगसँगै धावा बोल्न सकिन,
मैले खोजेको थिएँ
सानासाना चुहुने खण्डहर
झुप्राहरू मिलाउँ
र एउटा नयाँ सुरक्षित घर बनाउँ,
उसँगसंगै मैले
राष्ट्रलाई एउटा घर बनाउने
सपना त्यागेको घोषणा गर्न सकिन,
क्रमशः ओर्लिरहेको घामभ्रैं
हाम्रो मित्रता टुट्दै गयो
र विस्तारै हरायो
आकाशको नीलोपन

मैले बाल्न खोजेका
आकांक्षाका मैनबत्तीहरू
ऊ निरन्तर कुल्चिरहन्थ्यो
रेशमी जुत्ताहरूले,
भर्खरै आयातीत कोब्रा सर्पहरू
मेरो सपनाहरूलाई
डस्ने योजना कोरिरहन्थे
र ऊ थाप मारिरहन्थ्यो
उनीहरूको पिठ्यूँ,
आकाशका ताराहरू टिप्ने
सपना देख्न पनि नपाइने,
भोकाएका आफन्तहरू
अघाएको आकांक्षा पाल्न पनि नपाइने
उसको चाहनाभ्रैं
समान सपनाहरू बोक्ने
मनका पुलहरूमा
मैले बम फालेर ध्वस्त गर्न सकिन,
एकाथरीहरूसँग सपारे पछि
अर्कोसँग टुट्दो रहेछ
मनहरूको पुल

उसको र मेरो ्बीच
ओजन तहभ्रैं ढाकिएको छ
अविश्वासको बादल।
००

(कवि वेदना द्वैमासिकका सम्पादक हुनुहुन्छ।)

# ठेलावाल दाइ

मुरारी अधिकारी
लण्डन



जेठ महिना, काठमाडौंमा टन्टलापुर घाम लागेको थियो, हपहप गर्मी थियो, जमीनबाट राप उठिरहेको थियो र रापले बाटोछेउका रूखका पातहरू ओइलाएका थिए, म सहिदगेटबाट रत्नपार्कतर्फ एउटा पुरानो साइकलमा जाँदै थिएँ, बाटो खचाखच ट्राफिकले भरिएको थियो, मेरो साथसाथै ६०/६५ उमेरका एकजना ठेलावाल पनि आफ्नो ठेला ठेलिरहेका थिए । ठेलामा तरकारीहरू पाथी भरेजस्तै चुलिएका थिए । वीर अस्पतालबाट रत्नपार्कतिर लागेपछि ट्राफिक पूर्णतः रोकियो, ट्राफिक रोकिएपछि म एक खुट्टा भुइँमा र अर्को साइकलको पाउदानमा टेकेर उभिएँ । साथै, आइरहेको ठेला पनि रोकियो । सबैले ट्राफिक किन रोकियो भनेर जिज्ञासा राखे, म पनि जिज्ञासु बने । कसैले भीडमा भन्यो - असनबाट कमलाक्षी हुँदै एउटा जुलुस तीनधारा पाठशालातर्फ जाँदै छ, र त्यसैले सवारी रोकेको हो । त्यस्ता जुलुस त्यसवेलाका काठमाडौंका दैनिक नियमित घटना थिए ।

मेरो छेउको ठेलावालले आफ्नो मैलो ढाकाटोपी निकालेर आफ्नो पसिना पुछे र ठेलामा अढेस लागेर उभिए । निमेषभरमा नै उनी लड्खडाए र ठेला समाएर विस्तारै भुइँमा बसे । अनि उनी तत्कालै विस्तारै भुइँमा पल्टिए ।

'ए के भयो दाइ ?' मैले सोधें । तर, ठेलावालले कुनै उत्तर दिएनन् । मैले साइकल उभ्याएर उनको टाउकोमुनि हात राखें, उनका आँखा बटारिएका थिए, उनी बेहोस भएका थिए ।

'के भयो ? के भयो ?' थुप्रै प्रश्नहरू वर्सिए वरिपरिबाट ।

'यी दाइ बेहोस भए, कसैसँग पानी छ भने दिनूस् ।' मैले ठूलो स्वरमा भनें ।

'छारेरोग लागेको होला, जुत्ता सुँघाइदिनूस्,' एकजनाले भन्यो । 'मुर्च्छा परेको जस्तो छ, पानी खुवाइदिनूस्,' अर्कोले भन्यो । 'भोक लागेर लडेको जस्तो छ, केही खान दिनूस्,' अझ अर्कोले थप्यो ।

'यिनलाई गर्मीले खरो भएको जस्तो छ, पानी दिनूस्,' मैले दोहोऱ्याएँ ।

नजिकै ट्राफिकमा परेर उभिएको कारको झ्याल तल सारेर एउटी महिलाले एक बोतल पानी दिइन् । मैले पानी ठेलावाल दाइको निधार र मुखमा छर्किएँ, तर ती बौरिएनन् ।

'यिनलाई अस्पताल लानुपर्छ, कसैले हात दिनूस्,' मैले कराएर भनें । तर, कोही अगाडि सरेनन् । 'छिटो कसैले हात दिनूस्, यिनलाई अस्पताल लिएर जाऊँ !' तै पनि कोही अगाडि सरेनन् । 'यी दाइलाई अस्पताल लैजान सघाउन तपाईंहरू कसैमा पनि अलिकति मानवीयता छैन ?' म चिच्याएँ ।

एउटा वीस-बाइसको ठिटो अगाडि सऱ्यो र भन्यो, 'म छु दाइ, यिनलाई अस्पताल लैजाऊँ, म कता बोकौं ?'

'भाइ, तपाईं खुट्टातिर बोक्नुस्, म टाउकोतिर बोक्छु,' मैले भनें ।

हामी दुईले ठेलावाल दाइलाई बोक्न खोज्यौं, तर उनको शरीर बीचमा झुन्डियो । एकजना गाउँतिरबाट आएका मैलाधैला लुगा लगाएका अधबैंसे मानिस अगाडि सरेर ठेलावाल दाइको शरीरको बीच भागमा हात दिए ।

'बाटो छाड्नूस्, बाटो छाड्नूस्,' मैले कराएर भनें ।

हामी तीनजनाले ठेलावाल दाइलाई वीर अस्पतालको आपतकालीन कक्षमा पुऱ्यायौं, त्यहाँ ठूलो भीडभाड थियो । सबै वेडमा बिरामीहरू थिए । एउटा पनि वेड खाली थिएन । हामीले ठेलावाललाई आपतकालीन कक्षको बाहिर करिडोरमा एक छेउमा अडिइरहेको

स्ट्रेचरमा सुतायौं। त्यसपछि म डाक्टर बोलाउन कक्षभित्र गएँ, एकजना अधबैंसे डाक्टर एउटा कुनामा एउटा बिरामीलाई जाँच्दै थिए भने अर्को पच्चीसतीस वर्षका डाक्टर फोनमा हाँस्दै ठट्टा गर्दै कसैसँग रमाइलो कुरा गरिरहेका थिए । डाक्टरको कुरा सकिएला अनि ठेलावालको कुरा गरौंला भनेर म डाक्टरका छेउमा उभिरहें, तर उनको कुरा भने लम्बिरहेको थियो । मलाई आफ्नो साइकल हराउला भन्ने चिन्ताले सताइरहेको बेला आपतकालीन कक्षका डाक्टरको त्यो व्यवहार देखेर मलाई निकै रिस उठिरहेको थियो ।

निकैबेर पर्खेपछि मैले बिस्तारै भनें, 'डाक्टर साहेब, एउटा मान्छे बेहोस भएर ल्याएका थियौं, हेरिदिनुहुन्छ कि ?'

डाक्टरले रिसाएर मतिर हेरेर भने, 'देख्नुभएन ? म कसैसँग कुरा गर्दै छु । जब कुरा सकिन्छ, तब तपाईंको बिरामी हेरौंला । मेरो कुरामा बाधा नगर्नूस, एकछिन बाहिर कुर्नुस् ।'

'म निकै बेरदेखि तपाईंलाई कुरेर बसिरहेको छु । मैले ल्याएको मान्छे बेहोस छ । त्यो मेरो आफन्त पनि होइन,' मैले नम्रतापूर्वक भनें ।

'अहिले जानूस् । मेरो कुरामा बाधा नहाल्नूस् । मेरो कुरा सकिएपछि म तपाईंको बिरामी हेरौंला,' डाक्टरले फेरि रिसाएर भने ।

म डाक्टरलाई भेटेर फर्किंदा ठेलावाललाई गाडातिरबाट बोक्ने युवक मात्र पर्खिरहेका थिए, बीचमा टेवा दिने अधबैंसे मान्छे हिँडिसकेका थिए । ठेलावाललाई अझै होस आएको थिएन । हामी दुईले डाक्टरलाई निकैबेर पर्खियौं, तर डाक्टर देखापरेनन् । त्यसपछि म फेरि भित्र गएँ । युवा डाक्टर अझै फोनमा नै रमाइलो कुरा गरिरहेका थिए । मेरो बिचारमा डाक्टरको त्यो व्यवहार अत्यन्त अनुत्तरदायी थियो ।

म भित्र जाने बित्तिकै २/३ जना मान्छेले १०/१२ वर्षको एउटा केटालाई लिएर आए । तीमध्ये हातमा हेल्मेट बोकेको युवक फोनमा कुरा गरिरहेका डाक्टरको छेउमा गए र 'नमस्कार, डाक्टरसाहेब, मेरो भाइको दुर्घटना भयो र लिएर आएको' भने । डाक्टरले ती युवकलाई हातले नमस्कार फर्काए, त्यसपछि उनले फोनमा 'म पछि कुरा गरौंला' भने र फोन राखिदिए । अनि 'के भो भाइलाई ?' भनेर सोध्दै भर्खर ल्याएको केटालाई हेर्न गए । बेड नभएकोले केटा उभिरहेको थियो । उसको दाहिने खुट्टामा घाउ लागेको थियो र त्यस घाउबाट निकै रगत बगिरहेको थियो ।

डाक्टरले एउटा बिरामीलाई बेडबाट उठाएर त्यो केटालाई बेड दिए । त्यो केटालाई ल्याउने युवक र डाक्टरको कुराकानीअनुसार ती दुईको पूर्वचिनजान थियो । कत्ति बेरदेखि कुर्दा पनि ठेलावाललाई नहेरेर भर्खर ल्याएको केटालाई हेर्न गएर डाक्टरले गरेको अन्याय मलाई असहय भैरहेको थियो । त्यसैले मैले शिकायत गर्दै भनें, 'मेरो बिरामी कहिलेदेखि कुरेर बसिरहेको छ, उसलाई पहिले हेरिदिनुपर्‍यो ।'

'तपाईंले भनेर हुन्छ ? बिरामीको अवस्था हेरेर कसलाई पहिले हेर्ने भन्ने डाक्टरले निर्णय गर्छ, तपाईंले होइन,' डाक्टरले रिसाउँदै भने र केटालाई हेर्न थाले, म चुप लागेर उभिरहें, ती डाक्टरले नर्सलाई केटाको घाउ सफा गर्न र पट्टी लगाउन भने, त्यसपछि अर्को एउटा बिरामी हेरेर बल्ल डाक्टरले 'खै तपाईंको बिरामी ?' भनेर रूखो आवाजमा सोधे । मैले 'ऊ बाहिर छ' भनेर हातले इशारा गरें । मैले डाक्टरलाई ठेलावाल भएको ठाउँमा लिएर गएँ । यसैबीच मैले ठेलावाल सडकमा बेहोस भएको कुरा डाक्टरलाई बताएँ । डाक्टर ठेलावाल सुतेको ठाउँमा पुग्दा ठेलावालको होस फर्किसकेको रहेछ ।

डाक्टरले ठेलावालको नारी छामेर सोधे, 'के भयो ?'

'भाउन्न भएर रिँगटा लाग्यो, त्यसपछि के भयो थाहा भएन । होस आएपछि उहाँ बाबुले म सडकमा लडें भनेर भन्नुभयो ।'

डाक्टरले ठेलावालको छाती जाँचे र भने, 'ल खास केही भएको छैन, गर्मीमा कमजोरी भएर रिँगटा लागेको मात्र हो, राम्रो खाना खानू र खूब पानी पिउनू, एकछिन आराम गरेर गए हुन्छ ।'

ठूलो सन्तोषको सास फेरेर मैले डाक्टरलाई धन्यवाद दिएँ । डाक्टर हिँडेपछि म ठेलावालसँग बिदा मागेर हिँड्न लागेको थिएँ, तर ठेलावाललाई बोकीसघाउने भाइले 'म पनि तपाईंसँगै जान्छु' भने । ठेलावालले 'म पनि ठीक भएँ ।

त्यसैले म पनि साथै जान्छु' भने, मैले ठेलावाललाई 'तपाईंले एकछिन् आराम गर्नुपर्छ' भनेँ। तर, उनले 'म ठीक भएँ हजुर, म पनि जान्छु' भनेर हिँड्न ठीक परे। त्यसपछि हामी तीनैजना अस्पतालबाहिर निस्क्यौं, ठेलावालले हामी दुईलाई अस्पताल लगेकामा धन्यवाद दिए। बाटामा मैले युवक र ठेलावालका बारेमा शोधखोज गरेँ। युवक राजधानीको एउटा कलेजमा विद्यार्थी रहेछन्। ठेलावाल रुकुमबाट आएका रहेछन् र उनको नाम रामबहादुर पुन रहेछ। उनी शंखमूलको सुकुम्बासी बस्तीमा बस्दा रहेछन्। उनी परिवारमा एक्लै रहेछन् र अरू सदस्यहरू अतिवादी क्रान्तिताका मारिएका रहेछन्। अनि रामबहादुर सैनिक छोराको पेन्सन-उपदान लिने क्रममा काठमाडौं आएका रहेछन् र समय लागेकाले ठेला ठेल्ने काममा लागेका रहेछन्।

यत्तिकैमा हामी रामबहादुर बेहोस भएको ठाउँमा पुगिसकेका थियौं। ट्राफिक खुलिसकेको थियो। रामबहादुरको ठेला सडकको छेउमा सारिएको थियो, तर मेरो साइकल थिएन, मैले रत्नपार्कको बारमा कसैले राखिदियो कि भनेर पनि हेरेँ, तर मेरो साइकल हराएको थियो।

'ल मेरो साइकल त हराएछ,' मैले आत्तिएर भनेँ। 'कुन बजियालाई चोर्ने मौका परेछ ? हाम्रा मान्छे पनि कस्ता हुन् ?'

'हजुरको साइकल हराएकोमा मलाई सारै दुःख लाग्यो, यो मेरो कारणले भएको हो। मेरो दोष हो हजुर, माफ पाऊँ,' रामबहादुरले दुःखी भएर भने, युवकले पनि मेरो साइकल हराएकामा दुखमनाउ गरे।

'तपाईंको तरकारी त चोरी भएन ?' मैले रामबहादुरलाई सोधेँ।

'अर्काको दुःखबाट फाइदा उठाउने पापीहरूले केही तरकारी पनि चोरेछन्,' रामबहादुरले भुत्भुताउँदै भने।

'कस्ता डाकाहरू रहेछन्,' युवकले रिसाएर भने।

त्यसपछि युवक हामीसँग बिदा मागेर हिँडे। मलाई रामबहादुरको जीवनकथा साह्रै चाखलाग्दो लाग्यो। त्यसैले मैले उनीसँग आउने शनिबार शंखमूलमा भेट्ने कार्यक्रम मिलाएँ। रामबहादुर पनि मसँग बिदा भएर आफ्नो ठेला ठेलेर 'ठ्याकठ्याक' पार्दै सडकमा अगाडि बढे। म असमन्जसमा एकछिन् उभिएर बागबजारतर्फ लागेँ।

अर्को शनिबार, म रामबहादुरलाई भेट्न शंखमूल सुकुम्बासी बस्तीमा पुगेँ। त्यहाँ रामबहादुरले एउटा छाप्रो बनाएका रहेछन्। उनले मलाई चिया खान सोधे, तर मलाई चियामा भन्दा उनका बारेमा बढी चासो थियो। हामी रामबहादुरको छाप्रोमा एउटा बेन्चमा बस्यौं। म बेन्चको एक छेउमा र रामबहादुर अर्को छेउमा बसेर कुराकानी गर्न थाल्यौं।

+++

रामबहादुरको कान्छो छोरा केवल कामको खोजीमा साउदी अरेबिया गएका थिए। त्यहाँ २ वर्ष काम गरेर बिहा गर्न भनी घर फर्केको तेस्रो दिन बेलुका ४ जना अतिवादीहरू रामबहादुरको घरमा आए। उनीहरूले केवललाई सामन्तवाद र पुँजीवादको चपेटाबाट गरिब र सर्वहारावर्गको उन्मुक्ति र सर्वहारावर्गको अधिनायकवाद स्थापना गर्नका लागि लड्न उनीहरूको सङ्गठनमा आउन भने। तर, केवलले मानेन। केवल, जसले स्थानीय हाइस्कुलमा पढ्दा एउटा वामपन्थी दलको सदस्य भएर काम गरेको थियो, ले आजको आधुनिक युगमा प्रजातन्त्रको विकल्प नभएको र अधिनायकवादका लागि स्थान नभएकाले त्यस्तो क्रान्तिमा नलाग्ने जिकिर गऱ्यो। त्यसपछि उनीहरूले केवलसँग दुई लाख रुपैयाँ आर्थिक सहयोगका लागि अनुरोध गरे। दुई वर्षसम्म साउदी मरुभूमिमा ५० डिग्री तापमा काम गरेर उसले बल्लतल्ल दुई लाख रुपैयाँ ल्याएको थियो, आफ्नो र परिवारको सुनौला भविष्यको चित्र कोर्न। त्यसैले उसले आफूसँग त्यत्रो पैसा पनि नभएको र त्यस्तो सहयोगको औचित्य पनि नदेखेको कुरा गरेर अतिवादीलाई आर्थिक सहयोग गर्न असमर्थता देखायो। रामबहादुरले सम्झाउन कोसिस गरे तर उसले मानेन।

अतिवादीहरू रिसाए र तिनीहरूको नेताले केवललाई सल्लाहका लागि लिएर जाने कुरा गरे। रामबहादुरले लाख अनुनयविनय गरे, तर तिनीहरूले सुनेनन्। रामबहादुरकी श्रीमती कान्छीले कति रोइकराई गरिन्, तर तिनीहरूले सुन्दै सुनेनन् र केवललाई अँध्यारो रातमा

लाइट बालेर लिएर गए । जाँदाजाँदै तिनीहरूले पुलिसलाई खबर गरे केवलको ज्यान खतरा हुने धम्की दिए । छोराको ज्यानको मायाले उनी पुलिसकोमा पनि जान सकेनन् । एक जना अतिवादी संगठनमा लागेर छाडेका व्यक्तिको भनाइअनुसार केवललाई अतिवादीहरूले उनीहरूको शिविरमा लगे र एउटा त्रिपालमा राखे । त्यहाँ गगन भन्ने अतिवादी नेताले सम्झाइबुझाइ गर्ने प्रयास गरेछन्, तर केवल न त उनीहरूको संगठनमा लाग्न मान्यो, न त दुई लाख रुपियाँ दिन मान्यो । उनीहरूले दुई लाख दिन नसके एक लाख देऊ भने तर केवलले मानेन ।

अपहरणको दोस्रो रात बादलले छोपेको अँध्यारोमा अधिकांश अतिवादीहरू एउटा पुलिसचौकी हान्न गए । त्यस बेला दुई जना अतिवादीहरू मात्र केवललाई निगरानी गर्न बसेका थिए । त्यस्तो मौका पारेर पिसाब फेर्न गएको बेला उसले डिलबाट हामफाली भाग्न प्रयास गरेछ । भाग्दा अतिवादी शिविरको वरिपरि ओछ्याएको बारुद (माइन) टेक्न पुगेछ र बारुद पड्केर अलिकति घाइते भएछ र एकछिन् बेहोस पनि भएछ । अतिवादीले पिछा गरेर पक्डिएछन् र फेरि शिविरमा लगेछन् । विहानीपख पुलिस चौकी हान्न गएको टोली असफल भएर फर्किएछ । त्यहाँबाट फर्केपछि गगन र अरू केही अतिवादीहरूले केवललाई निकै समय हिँडाएर एउटा चौतारोमा पुऱ्याएछन् र मारेछन् । रामबहादुर बिहान एउटा युवकको लास भेटिएको हल्ला सुनेर कतै केवल त होइन भनेर छोरीलाई लिएर हेर्न जान लागे । कान्छीले म पनि जान्छु भनेर जिद्दी गरी । बिरामी थिई, तैपनि मानिनँ । केही गाउँलेहरूलाई लिएर उनीहरू त्यता गए ।

केवलका हात, खुट्टा र टाउको शरीरबाट छुट्टिएका थिए । लासमाथि एउटा सूचना थियो, त्यसमा ठूलाठूला अक्षरमा लेखिएको थियो, 'जसले हाम्रो क्रान्तिको विरोध गर्छ, त्यसको हविगत यस्तै हुन्छ ।'

त्यो देखेर रामबहादुरलाई भाउन्न भयो । कान्छी बेहोस भई । छोरी पनि रुन कराउन थाली । उनीहरूले केवलको लासको सद्गत गरे र घर फर्किए । घरमा रामबहादुरले एकजना नातेदारलाई किरियापुत्री राखे । तर, त्यसको केही दिनमा अतिवादीहरू फेरि उनको घरमा आएर किरिया जस्तो सामन्ती कार्य नगर्नू, गरेमा क्रान्तिकारी दलले कारबाही गर्ने धम्की दिएर गए । उनले गोप्य रूपमा काजक्रिया सक्न लगाए । यसरी उनको एउटा छोराको दुखद् अन्त भयो ।

रामबहादुरका आँखा भरिएर आए र उनले टोपी फुकालेर आँखा पुछे । 'म चिया ल्याउँछु' भनेर उनी उठेर गए र नजिकको चिया पसलबाट दुई कप चिया लिएर आए । हामी दुवै चिया पिउन थाल्यौं ।

'अनि तपाईंकी श्रीमतीचाहिँ कहाँ हुनुहुन्छ ?' चिया पिउँदै मैले सोधेँ ।

रामबहादुरले भन्न सुरु गरे : 'मेरी श्रीमती रोगी थिइन् । उसलाई मुटुको रोग लागेको थियो, छोराको मृत्युपछि तिनी बहुलाइन् र केही समयमा उनको मृत्यु भयो । विचरी, उसलाई नातिनातिनाको मुख हेरेर मर्ने धोको थियो, तर त्यो पूरा भएन । छोराछोरीको बिहा हुनुअगावै तिनी मृत्युको मुखमा गइन् । बिडम्बना पनि कस्तो हजुर, केवल बिहा गर्न भनेर साउदी अरेबियाबाट आएको थियो, तर ऊ फर्केको केही दिनमा नै मारियो ।

छोरी कमला मेरा ३ सन्तानमध्ये सबभन्दा सानी थिई । उसको बिहा गर्ने उमेर भएको थिएन । आमाको मृत्यु भएको केही दिनपछि ऊ एक दिन स्कुलबाट फर्किनँ । म छोरी खोज्न स्कुलमा गएँ, उसका साथीसङ्गीको घरमा गएँ, तर यकिन केही पत्ता लागेन, एउटी साथीले पल्लो गाउँको रमेश भन्ने ठिटोसँग स्कूलबाट हिँडेको कुरा गरी । म रमेशको घर गएँ तर त्यहाँ न त रमेश थियो, न त कमला नै । रिमरिम साँझ परेपछि रमेशको लास गाउँमुनिको देवीथानको छेउमा लडिरहेको हल्ला आयो । म दौडेर त्यहाँ गएँ तर त्यहाँ रमेशको लासमात्र थियो । ऊ गोली लागेर मरेको रहेछ । कमला त्यहाँ थिइनँ । रमेशका परिवारले कमलाले रमेशलाई मारेर भागी भने तर ऊसँग त बन्दुक थिएन । पछि गोठालाहरूले गोली चलेको सुनेको र गोली चलेपछि ४ जना पुलिस तलतिर झरेको कुरा सुनाए । अनिमात्र हाम्रो दुई गाउँको झगडा साम्य भयो । भोलिपल्ट मैले कमलाले पठाएको चिट्ठी पाएँ ।

त्यसमा लेखिएको

थियो: 'बाबा, म मेरो नारीत्वको शोषण गर्नेहरूसँग बदला लिन जाँदै छु, मलाई न खोज्नुहोला, म मेरो लक्ष्य पूरा भएपछि फर्केर आउनेछु ।'

निकै पछि थाहा भयो, रमेश अतिवादीहरूसंग लागेको रहेछ । उसले कमलालाई पनि प्रेममा पारेको रहेछ । मलाई त थाह थिएन, कमला स्कूलबाट नफर्केको दिन दुईजना स्कूल छाडेर देवीथान गएका बेला रमेशलाई खोज्दै पुलिस आएछन्, पुलिसले रमेशलाई मारेछन् र कमलालाई बलात्कार गरेर हिँडेछन्, कमला देवीथानबाटै अतिवादीहरूको शिविरमा गइछ । अतिवादीहरूको बिश्वास जितेर कमलाले छिट्टै प्रगति गरिछ र छोटो समयमा नै अतिवादी सेनाको स्थानीय उपप्रमुख हुन पुगिछ । उसको नेतृत्वमा रुकुम जिल्ला पुलिस कार्यालयमा आक्रमण गर्दा उसले ४ जना बलात्कारीमध्ये २ जनालाई भेटिछ र गोली ठोकेर मारिछ । अरू दुईजना जिल्ला छाडेर गैसकेको पनि थाहा पाइछ । त्यसपछि तुलसीपुर ब्यारेकमा अतिवादीले आक्रमण गर्दा कमलाको नेतृत्वमा गरेको रहेछ, तुलसीपुर ब्यारेकमा अतिवादीले आक्रमण गरेपछि सरकारले शत्रुलाई तह लगाउने योजना बनाएछ । यसै क्रममा सैनिकहरू सल्यान जान लागेको बेला कमलाको नेतृत्वमा शारदा खोलाको किनारमा अतिवादीले सैनिकमाथि आक्रमण गरेछन् । त्यस आक्रमणमा दुवैतर्फ थुप्रै हताहत भएछन् । सैनिक हेलिकप्टर आएपछि अतिवादीहरू भागेछन् । त्यो लडाईंमा मेरा दुई जना छोराछोरी थाहै नपाई आमनेसामने परेछन् ।'

रामबहादुरको भक्कानो फुट्ला जस्तो भयो । उनले मन थाम्न नसकेर एकछिन् आकाशतिर हेरे र फेरि बोल्न सुरु गरे :

'उमेर छँदा म हाम्रो पारिवारिक प्रचलनअनुसार सैनिक सेवामा गएको थिएँ । बुबाले नसक्ने भएपछि घरव्यवहार सह्माल्न मैले जागिर छाड्नुपर्‍यो । मैले पनि जेठो छोरा कृष्णलाई सैनिक सेवामा जान भनेँ । उसले पनि मान्यो र सेनामा गयो, उसको बिहाको कुरा चलिरहेको थियो । केटी खोजेर ठीक पनि पारेका थियौं, तर केटीको गाउँमा बिदामा फर्केको एकजना सैनिकलाई अतिवादीले मारेपछि केटीका बाबुआमा तर्सिए र बिहा पर सार्न भने । हामीले बिहा पर सार्‍यौं । जब अतिवादीहरूले खोजीखोजी सैनिक र प्रहरीलाई मार्न थाले । केटीका बाबुआमाले सैनिकलाई छोरी दिएर बिधवा नबनाउने भने, कृष्णको बिहा भएन ।

अतिवादीहरूले तुलसीपुर ब्यारेकमा आक्रमण गर्दा कृष्ण सोही ब्यारेकमा थियो । तुलसीपुर ब्यारेकमा आक्रमण गर्नुअघि अतिवादीहरूले दुईवटी तरुनी केटीहरू पठाएर ब्यारेकबाहिर एउटा चिया पसल खोल्न लगाएका थिए । ती केटीहरूले चियामात्र बेचेनन्, सैनिकहरूसँग लहसिएजस्तो गरेर ब्यारेकभित्रका खरखजाना, सैनिक संख्या आदिको बारेमा सबै सूचना संकलन पनि गरे । त्यही सूचनाको आधारमा अतिवादीहरूले ब्यारेकमा आक्रमण गरेका थिए । कृष्णले फोहोरको खाल्डोमा लुकेर ज्यान जोगाएको थियो । त्यही आक्रमणको बेला कृष्णले कमला अतिवादीकी स्थानीय उपप्रमुख भएको थाहा पाएको थियो ।

कृष्णलाई तुलसीपुर ब्यारेकमा अतिवादीले आक्रमण गर्दा आफूले फोहोरको खाल्डोमा लुकेर ज्यान जोगाएकामा ठूलो आत्मग्लानी भएको थियो । त्यसैले शारदाको किनारमा भएको भीडन्तमा कृष्ण आफूलाई त्यो अत्माग्लानीबाट मुक्त गर्न बहादुरीपूर्वक लड्न चाहन्थ्यो । त्यस युद्धमा जब अतिवादीहरूले अग्लो ठाउँबाट लुकेर सैनिक गाडीहरूमा आक्रमण गरे, कृष्णले गाडीबाट ओर्लेर एउटा खोल्सैखोल्सा अतिवादीहरूको नजिक पुगेर उनीहरूको कमान्डरलाई गोली ठोक्न लागेको थियो । उसले त्यहाँ ५-६ जना अतिवादीहरूलाई मारेको थियो । जब उसले कमान्डरतिर बन्दुकको नाल सोझ्यायो, उसले देख्यो- उसकी आफ्नै बहिनी, प्यारी बहिनी कमला रहिछ । उसले केटाकेटीमा कमलाको धेरै पटक ज्यान जोगाएको थियो ।

तर त्यस युद्धभूमिमा कमला उसको बन्दुकको निसानामा थिई । उसको मनमा एउटा दाजुको बहिनीप्रतिको माया र उसको ज्यानको संरक्षण गर्ने दायित्व थियो भने अर्कोतर्फ एउटा सैनिकको हैसियतले शत्रुलाई मार्ने कर्तव्य थियो । उसको मनमा यी दुईको बीचमा ठूलो युद्ध चलिरहेको थियो । उसले महाभारतको युद्धमा अर्जुनलाई परेको धर्मसङ्कट सम्झ्यो र भगवानलाई प्रार्थना गर्‍यो

- 'हे भगवान्, म के गरौं ? मलाई बाटो देखाइदेऊ ।'

कमला, जसको अतिवादीहरूका बीचमा बिजुली नाम थियो, लाई कृष्ण तुलसीपुरमा भएको थाहा थिएन । उसले शारदाको किनारमा कृष्णलाई देखेकी पनि थिइनँ । जब उसको एउटा सहयोगीले सैनिक ट्रकमा बम फ्याँक्यो, त्यसबाट ठूलो धमाका भयो र ट्रकको टंकी फुटेर आगोको मुस्लो आकाशमा गयो । आत्तिएर कमला टुक्रुक्क बसी । त्यसैबेला उसले एउटा हेल्मेट लगाएको सैनिकलाई खोल्सामा लुकेको देखी । त्यो सैनिकले आँखा चिम्लेको थियो । ठीक त्यसैबेला कमलाले बन्दुक सोभ्याई र गोली ठोकी । त्यो सैनिक खोल्सैखोल्सा अलिक तलसम्म चिप्लिएर निश्चल भयो ।

त्यसको केही छिन्मा सैनिक हेलिकप्टर आकाशमा देखा परे र अतिवादीहरू भागे । सैनिकहरूले आफ्ना मारेका साथीहरूको लास सङ्कलन गरेर ट्रकमा हाली त्यहाँबाट छिटोछिटो गरी तुलसीपुर फर्के । सैनिक र उनीहरूका हेलिकप्टर हिँडेपछि अतिवादीहरू फर्केर आए र आफ्ना कमरेडहरूका लास सङ्कलन गरे । खोल्सामा उनीहरूले एउटा सैनिकको लास पनि भेटे । उनीहरूले कमलालाई त्यो सैनिकको लासलाई के गर्ने भनेर सोधे । कमलाले बाटोमा ल्याएर 'क्रान्तिको विरोध गर्नेको यस्तै हविगत हुन्छ' भन्ने सूचना लेखेर छाड्न भनी ।

जब सैनिकको लास ल्याइयो, कमला छाँगाबाट खसेजस्तै भई । त्यो उसको दाजु कृष्णको लास थियो । कमलाले टुक्रुक्क बसेर गहभरि आँसु पारेर कृष्णको गाला सुम्सुम्याई र उसको खुला आँखा बन्द गरिदिई । उसलाई भक्कानो फुटेर आएको थियो तर क्रान्तिकारी नेताको हैसियतले ऊ शत्रुको लासमाथि रुन सक्तिनथी । त्यसपछि उसले कृष्णको लासलाई अरू कमरेडहरूसँगै सम्मानपूर्वक गाड्न भनी । उसका सहयोगीहरू छक्क परे । बिजुलीले शत्रुप्रति त्यस्तो कमलोपन त्यसअघि कहिल्यै पनि देखाएकी थिइनन् । तर, उनीहरूले आदेश पालन गर्नै पर्थ्यो, गरे । कमला त्यसपछि उदास, एकतमासकी भैरही । तैपनि शिविरमा फर्केपछि उसले शानदार क्रान्तिकारी भाषण दिएर कमरेडहरूको प्रसंशा गरी, उनीहरूले वहादुरीपूर्वक शत्रुलाई परास्त गरेकामा ।

कमलाले खान सकिन त्यस बेलुका, दाजुलाई सम्भिरही । उनीहरूले साथै बिताएका रमाइला क्षण सम्भी । दाजुले ऊ रूखबाट भर्न लाग्दा र नदीमा बग्न लाग्दा आफ्नो ज्यान जोगाएको सम्भी । खानापछि जब ऊ आफ्नो पालमा गई, अनिमात्र उसले एकान्त पाई र एक्लै रोई । ऊ रातभर सुत्न सकिन । युद्धबाट ठूलाबडालाई होइन, गरिबगुरुवालाई बढी असर परेको ठहर गरी र यसको उपादेयतामाथि प्रश्न गरी । उसले मनन् गर्दादेखि उनीहरूको युद्धबाट, उनीहरूको भौतिक कारबाहीबाट देशका ठूलाबडा होइन, गरिब र दु:खीहरूले बढी पीडा भोगिरहेका थिए । चाहे सैनिक हुन् या कमरेड, दुवैथरी गरिब परिवारबाट आएका थिए र मारिने तिनै थिए । भोलि उनीहरूको सगठनको जित भए पनि उनीहरूमध्ये ठूलाबडाकै रजाइँ हुने कुरामा ऊ विश्वस्त भई । उसले मनमनै एउटा ठूलो निर्णय लिई र सुती ।

भोलिपल्ट बिहानै उसले आफ्ना लडाका लुगाको ठाउँमा कुर्तासुरुवाल लगाई । आफ्नो पिस्तोल भिरी र शिविरबाट निस्की, किरण, जो गगनकी प्रेमिका थिई र उनीहरूको दलभित्र बिजुलीको तीव्र प्रगति भएको र ऊ उपप्रमुख भएकीमा जलेकी थिई, ले बिजुलीलाई कुर्तासुरुवालमा जान लागेको देखी । उसले लामो समयदेखि बिजुलीको गतिविधिमाथि निगरानी रखिरहेकी थिई, उसलाई आफ्नो प्रतिद्वन्द्वीको मनस्थिति बुभ्न कत्ति गारो भएन । उसले हत्तपत्त आफ्ना विश्वासप्राप्त कमरेडहरूलाई सतर्क गराई र बिजुलीको चियो गरिरही । जब बिजुली उनीहरूको शिविरबाहिर पुगी, किरणले आफ्नो बन्दुक सोभ्याई । जब कमलाले अन्तिम एकपटक हेर्न शिविरतर्फ मुन्टो फर्काई, उसले किरणलाई बन्दुक ताकेर उभिएको देखी । बिजुलीको गतिमा कमरेड बिजुलीले पिस्तोल भिकी र गोली ठोकी । किरण पर्लक्कै ढली, ३/४ तिरबाट गोली पड्के र कमला पनि ढली ।'

रामबहादुरको गला अवरुद्ध भयो र आँखाबाट आँसु भरे । उनले आँसु पुछे । एकछिन् बोल्न

सकेनन् । मैले अवाक् भएर हेरिरहेँ । एकछिन् रोकिएर रामबहादुरले फेरि सुरु गरे :

'म कृष्णको पेन्सन र उपदान लिन काठमाडौं आएँ, तर उसको लास नभेटिएकाले उसलाई युद्धमा हराएको भनिएको रहेछ । मलाई अतिवादीहरूले तिम्रो छोरा कृष्ण मारियो भनेर खबर त पठाए तर त्यसको प्रमाण मसँग केही भएन । अतिवादीले मलाई लास दिएनन्, लास नभेटिएकाले भागेको हो कि भन्ने शङ्का पनि होला सैनिक अधिकारीहरूलाई, त्यसैले म कृष्णको पेन्सन-उपदानका लागि पर्खेर बसेको छु । एक वर्ष भयो, निर्णय भएको छैन, त्यसैले जीविकाको लागि ठेला ठेल्छु ।'

मेरा पनि आँखा रसाएर आए अनि गाला अवरुद्ध भयो । एकछिन् चुपचाप बसेपछि मैले घडी हेरेँ, दिउँसोको एक बजिसकेको रहेछ । मैले उठ्तै भने, 'रामबहादुर दाइ, म पनि तपाईंलाई सक्दो सहयोग गरौंला, अहिलेलाई म जान्छु, म फेरि भेट्न आउँछु ।'

त्यसपछि म बिदा भएर हिँडें । त्यसको केही दिनपछि टन्टलापुर घाममा मैले रामबहादुरलाई वीर अस्पताल नजिक ठेला ठेल्दै गैरहेको देखें । मैले ठूलो स्वरमा भनें, 'ए रामबहादुर दाइ, सन्चै हुनुहुन्छ ?'

'सन्चै छु हजुर, हजुरलाई कस्तो छ ?'

'मलाई ठीकै छ,' अनि मैले सोधें, 'व्यापार कस्तो छ हिजोआज ?'

'एक दम राम्रो छ, खूब व्यस्त छु, पछि भेटौंला है हजुर ।'

यसो भन्दै ठेला 'ठ्याकठ्याक' पार्दै रामबहादुर उत्साहपूर्वक अगाडि बढे । आश्चर्य मानेर मैले सोचेँ, रामबहादुरजस्ता आशावादी मान्छेले जीवन बाँच्न योग्य बनाउँछन् ।

००

**(लेखक संयुक्त राष्ट्रसङ्घका स्थायी प्रतिनिधि, पराराष्ट्रविद् तथा कुशल कूटनीतिज्ञसमेत हुनुहुन्छ ।)**

# जिन्दगी

## मनीष श्रेष्ठ



सोचेजस्तो हुन्न जीवन, नसोचेको भैजान्छ
जीवनमा खुसीका पलसमेत मान्छे निरन्तर दौडिरहन्छ
यसो गरौं, उसो गरौं भन्दाभन्दै जीवन त्यसै बितिजान्छ ।

न पत्याउँदा मोडहरू अप्रत्यासित आइदिन्छन्
सहज लाग्ने गोरेटाहरू पनि अप्ठ्यारा भैजान्छन्
यसो गरौं, उसो गरौं भन्दाभन्दै जीवन बितिजान्छ ।

मायालुको मीठो माया पनि असहजमा तीतो भैदिन्छ
साथ दिन्छु भन्ने हातहरू पनि बीच बाटैमा साथ छाडिदिन्छन्
यसो गरौं, उसो गरौं भन्दाभन्दै जीवन त्यसै बितिजान्छ ।

मानसम्मान, आदर सब समय-परिस्थितिसँगै बदलिजान्छ
गरिबीको पर्खालले धेरैपछि अपमानको बाहुबलले थिचिदिन्छ
यसो गरौं, उसो गरौं भन्दाभन्दै जीवन त्यसै बितिजान्छ ।

सुखदुःख समयचक्र हो, सबै भन्छन् जीवन घुमिरहन्छ
सुखको मात लागेपछि, मान्छेले दुःखका दिन किन बिर्सिजान्छ
यसो गरौं, उसो गरौं भन्दाभन्दै जीवन त्यसै बितिजान्छ ।

समयचक्र निरन्तर घुमिरहन्छ, जब खुल्छ मान्छेको ज्ञानचक्षु
यसो गरौं, उसो गरौं भन्दाभन्दै मान्छे नै बितिजान्छ ।

# नयाँ बादलको आकाशको परिकल्पना

ललितकुमार न्यौपाने



जन्मिएर संसार देखेकै दिनदेखि
पुस्तौंदेखिका यी नदीनाला, हिमाल यी प्राकृतिक चित्रहरू
नेपाली मूल्यको अस्तित्व
जगेर्ना गर्ने दायित्व
हामीमा आएको थियो
जिन्दगीका कथाका पानाहरू पल्टँदै जाँदा
आफ्नो दायित्वप्रति सजग रहँदै
कल्पित लक्ष्य र सपना सजाउँदै
भगीरथ प्रयासमा जुट्दै गयौं
घामपानीको प्रचण्ड गर्मी र झरीसँग जुझ्दै, रुझ्दै
वर्षौं त के पूरा जिन्दगीभर जुट्ने
भीष्मप्रतिज्ञा लिइ
कैयौं आफ्ना सहयात्री वीरत्वहरू गुमाएपछि
भालेको डाकपछि पूर्व उज्यालो भएको छ
उज्यालो बिहानीमा
नयाँ बादलको आकाशको परिकल्पना गरिएको थियो

उज्यालो परिवेशले हाम्रा चाहना र कल्पनालाई
स्कट र प्याट्रियटले क्षेप्यास्त्र निस्क्रिय पारेझैं
निस्क्रिय पार्ने डर उब्जिएको छ
मुटुभरिका आशा र विश्वासका धुकधुकीहरू
सेलाएझैं लागेको छ
पाएर पनि केही नपाएजस्तो
भेटाएर पनि बाँदरको हातको नरिवल जस्तो हुने पो हो
तर पनि
हाम्रा समग्र विभाजित मनहरू एकत्रित गरेर
हरवसन्त, हरघडी पहाड चढ्दै पसिना बगाउँदै गए
अन्योल, अशान्ति, विकृति र विसङ्गति हटाउँदै गए
हिमनदी र खोलाहरूका बाढीजस्तै
गडतीरे बाटो पहिल्याउँदै गए
हामी निराश हुनुपर्ने छैन ·
नयाँ बादलको आकाश देख्न
अब धेरै कुर्नुपर्ने छैन ।

# अनुरोध

विनोद न्यौपाने

दाइ
तपाईंलाई थाहा छ
मैले अमिलोपन लिएर
मेरो देशको संघार काटेको छु
म हाँसेर हैन, रोएर
परदेश लागेको छु।

म सधैँसधैं मकालुसँगै
हाँस्न चाहन्थेँ
निश्चल हाँसो
म अरुणसँगै बग्न चाहन्थेँ
कञ्चन पानी,
तराईको उर्वर फाँटमा
पसिनाको धारो बगाएर
लहलह अन्न फलाउने रहर
हराएको छैन
चौतारी र भन्ज्याङतिर
थकाइ मार्दै, मार्दै
हलो र जुवा काँधमा हालेर
लेक र बेसी गर्ने धोको
पुगेकै छैन।

दाइ
तपाईंलाई थाहै छ
परिस्थिति र बाध्यताले
आज म
कतै
अरबको तातो मरूभूमिमा
उँट र बाख्राका गोठहरूमा
मृत्युसँग पौंठेजोरी खेल्दै
कतै
मलेसियाका कारखानाहरूको
मेसिनसँग लुकामारी गर्दै
कतै
युरोप र अमेरिकाका
कहालीलाग्दा
भीडहरूमा
पहिचानविहीन भएर
पलपल गर्दै
समय कटाइरहेछु
र
म मेरो देश फिर्ने दिन गनिरहेछु।

दाइ
परदेश मेरो रहर हैन
मेरो रहर मेची र महाकाली हो
मेरो रहर
हिमाल र तराई हो
म
स्वच्छन्द भएर
म
निर्भिक भएर
म
नेपाली भएर
म
मेरै देशमा बाँच्न चाहन्छु
म
मेरै देशमा मर्न चाहन्छु।
त्यसैले दाइ
मेरो बिन्ती छ है
म नआउन्जेल
मैले थकाई मार्ने चौतारी
चौतारी नै रहोस्
मेची र कालीका पानी
शुद्ध बग्दै रहून्
मेरो सेता हिमालमा
दाग नलागोस्
मेरो तराईको उर्वरता
अझै बढोस्
म अझै
पहाडमा खन्न चाहन्छु
म आफैं
तराईमा जोत्न चाहन्छु
म
मेरै देशमा रम्न चाहन्छु
म,
मेरै नेपालमा बाँच्न चाहन्छु।
००

# विश्वभरका नेपाली स्रष्टा र सिर्जनालाई समेट्ने साझा संस्थाको आवश्यकता



विश्वासदीप तिगेला
सनेकिल्फ, केन्ट, बेलायत

**विषयप्रवेश**

समयको गतिसँगै नेपाली साहित्य अघि बढ्दै जानेक्रममा अहिले कहाँसम्म पुग्यो र अब कता, कसरी जानुपर्छ भन्ने सवालमा चिन्तन गर्नुपर्ने बेला भएको छ । समकालीन साहित्यहरूले फड्को मारिरहेको बेला नेपाली साहित्य भने परम्परागत तरिकाले जेनतेन मात्र धानिरहेको अवस्था छ। त्यसैले समयको परिवर्तनसँगै विश्वव्यापि नेपाली साहित्यको श्रीवृद्धिका निमित्त नयाँ सोचका साथ नयाँ कार्य गर्न जरुरी भएको छ ।

साहित्य समाजको दर्पण हो र प्रत्येक व्यक्ति, समुदायमा यसको महत्त्वपूर्ण भूमिका रहेको हुन्छ । व्यक्ति, समुदायको पहिचान, प्रतिष्ठा र अस्तित्वको साहित्यसँग प्रगाढ अन्तरसम्बन्ध रहेको हुन्छ। तसर्थ हाम्रा लागि साहित्य पनि अत्यन्तै महत्त्वपूर्ण फाँट हो ।

नेपालीपन, नेपाली संस्कार, संस्कृति, दुःख, सुख र पीडा वेदना, बोल्ने जुनसुकै भाषामा लेखिएको सिर्जना नेपाली साहित्यको परिभाषाभित्र पर्ने भएकाले नेपाली साहित्यजगत् विशाल र व्यापक छ । नेपाली भाषासाहित्य भन्नुभन्दा नेपाली साहित्यमात्र भन्दा सबैलाई समेट्ने र समावेसी हुने भएकाले हामी नेपाली साहित्यका निम्ति क्रियाशील छौँ । पछिल्लो समयमा **नेपालीहरू विश्वभर छरिएर रहेको अवस्थासँगै प्रविधि विकासको फ्यूजनले** डायस्पोरामा रहेका स्रष्टासर्जकहरूको उपस्थिति उत्साहजनक छ भन्दा गलत नहोला । अझ यसलाई यसरी भनुँ नेपाली साहित्यका बिरुवाहरू विश्वभर टुसाएका छन्, यसबेला स्याहार, सम्भार र संरक्षण गर्दै मलपानी लगाउनुपर्ने आवश्यकता भएको छ। त्यसैको खातिर नेपाली साहित्यको लागि **हाम्रो मान्यता - साझा र पारदर्शिता** नाराको साथ विश्वव्यापि रूपमा साहित्य सञ्जाल निर्माणको पूर्वतयारीमा जुटेका छौँ ।

अस्तित्वमा देखिएका विश्वका २ सयभन्दा बढी देशमध्ये लगभग ९० प्रतिशत मुलुकमा विभिन्न कारणले नेपाली मन र नेपाली मुटु बोकेर कोही न कोही नेपाली पुगेका अनुमान गर्न सकिन्छ । कुनै देशमा धेरै छन्, कुनै देशमा थोरै छन् । कुनै देशमा विभिन्न नेपाली संघसंस्था निर्माण भएका छन् भने कतिपय देशमा निर्माण हुने प्रक्रियामा छन्। त्यसैगरी धेरै देशमा साहित्यिक संघसंस्था पनि स्थापना भई सञ्चालनमा रहेका छन्। विभिन्न देशका आ-आफ्ना विशिष्टताबाहेक प्रवासमा हुने पीडा, वेदना, दुःख, दर्द सबैका उस्तै देखिन्छन् र तिनै रामाराम्रा अनुभव, अनुभूतिहरू खुराक बनेर साहित्यका रूपमा निरन्तर आइरहेको अवस्था छ। यिनै निरन्तर साहित्य सिर्जनाबाटै अझ राम्रो साहित्यको आस गर्न सकिन्छ । त्यसैले, यो अत्यन्तै सुनौलो अवसर पनि हो। यसलाई हामी तमाम स्रष्टा, सर्जक तथा शुभचिन्तकहरूले आत्मसात गर्नुपर्ने बेला भएको छ।

नेपाली साहित्यको सेवाका निम्ति विश्वभरमा अनगिन्ती संघसंस्था सञ्चालनमा रहेका छन् । ती सबै संस्थाका आ-आफ्नो ठाउँमा अस्तित्व र उच्चमहत्त्व अवश्य रहेको छ। संस्थाका योगदानबारे भोलि इतिहासको पानामा सुनौलो अक्षरले लेखिने नै छ । अझ प्रवासमा अरू देशका नागरिकबाट हुने अपमान, अन्याय र शोषणको बाबजुद पनि गाँस काटेर साहित्य क्षेत्रमा तन, मन र धन खर्च गर्ने स्रष्टाहरूको अवस्था जान्दा जो कसैको आँखा रसाउँछ। तर, नेपाली साहित्यको केन्द्रमा रहनेहरूलाई उक्त अनेकानेक समस्या, पीडा र वेदना बावजुद नेपाली साहित्यमा लागेका स्रष्टा र सिर्जनाहरूको सम्बन्धमा अनभिज्ञता हुनु हाम्रो विडम्बना हो। त्यसैले सशक्त र स्पष्ट पहिचान बोक्न सक्ने साहित्यिक सञ्जाल निर्माण गरेर देश र परदेशका साहित्यिक समस्याहरूका विरुद्ध एकजुट भई लड्न आवश्यक भएकाले यो साहित्यिक सञ्जालको अवधारण आएको हो ।

एकता नै बल हो भन्ने मान्यताको आधारमा विश्वभरका समस्त स्रष्टा तथा साहित्यिक संघ, संस्थाहरूलाई एकै सञ्जालमा समेटेर नेपाली साहित्यमा अरू धेरै विकास र प्रगति गर्न सकिन्छ भन्ने विश्वास लिएर साथै अन्य संघ, संगठनहरूमा पनि काम गरेको विभिन्न अनुभवहरूलाई समेटेर यसपटक सही सदुपयोग गर्ने जमर्को गरेका छौं । हामीसँग विभिन्न देशमा रहनुभएका धेरै स्रष्टा, सर्जकहरू र सङ्घ, सङ्गठनहरू सम्पर्कमा आउनुभएको छ र आउनेक्रम जारी रहेको छ । यथासम्भव सबै स्रष्टा, सबै संस्थाको सामूहिक प्रयत्नमा यो सञ्जाल स्थापना हुँदै छ । यसर्थ तपाईं सबैलाई राम्रो कामको निमित्त सद्भाव, आशिष, सल्लाह, सहमति, सहकार्य, सहयोग र संलग्नताको लागि निम्तो गर्दछौं ।

विश्वभरका नेपाली साहित्यलाई समेट्ने उद्देश्यले निर्माणाधीन व्यापक यो सञ्जाल निश्चय नै नयाँ सोच हो र यो रचनात्मक कामका लागि नयाँ र नौलो कार्यक्रमहरूको पनि आवश्यकता पर्दछ । त्यसैले यस सञ्जालको अवधारणाभित्र सबैलाई समेट्ने विशेषत साझा भावना रहेको छ, रहनेछ । यस्ता राम्रा कामका लागि सबैबाट सरसहयोग, सुझाव र सहभागिता हुनेमा हामी पूर्ण विश्वस्त छौं । साझा काम, साझा दायित्व पूरा गर्न हामी सबै आजैबाट जुटौं । प्रस्तावित नयाँ सञ्जालको छलफलका लागि तत्कालीन, दीर्घकालीन कार्ययोजना तथा आधारभूत रणनीतिहरू यहाँ प्रस्तुत गरिएको छ ।

## निर्माणधीन नयाँ सञ्जालको तत्कालीन र दीर्घकालीन प्रस्तावित कार्ययोजनाहरू

### तत्कालीन:

१. सञ्जालको वेवपेज तत्काल निर्माण गरी सञ्चालनमा ल्याउने, जसले हामीलाई काम गर्न सूचना प्रभाव गर्न मद्दत पुग्नेछ ।
२. अत्याधुनिक प्रविधिमा समेत नेपाली साहित्य प्रवेश गरिसकेको परिप्रेक्ष्यमा प्रविधिलाई माध्यम बनाएर विभिन्न प्रकारका क्रियाकलाप तथा प्रतियोगिताको आयोजना गर्दै विश्वभरका स्रष्टाहरूमाझ उपस्थिति दर्शाउँदै सीधै सम्पर्कको पुल निर्माण गरी सहयोगी र अभिभावकत्व प्रदान गर्ने ।
३. नेपाल प्रज्ञा प्रतिष्ठानसँग समन्वय गर्दै डायस्पोरामा फैलिँदै गएको नेपाली साहित्यको पहिचान र प्रतिष्ठाका लागि प्रज्ञा प्रतिष्ठानमा डायस्पोरा विभाग राख्न माग गर्ने ।
४. विभिन्न लेखकले विभिन्न भाषामा नेपाल तथा नेपाली संस्कार, संस्कृतिका बारेमा लेखेका लेख तथा पुस्तकहरूमा गल्ती कुराहरू बेग्रल्ती पाइन्छन् । यसर्थ, उनीहरूलाई सहयोगीको हैसियतले सुधार गर्न सल्लाह, सुझाव र दबाब दिन कम्तिमा ३ देखि ७ जनाको टास्कफोर्स तयार गर्ने ।
५. सञ्जाल मातहतमा विभिन्न पुरस्कार, सम्मान तथा उत्कृष्ट पुस्तक छनोट गरी प्रदान गर्न तुरुन्तै पहल थाल्ने । डायस्पोरा नेपाली साहित्यका लागि २ वटा पुरस्कार र २ वटा सम्मान साथै नेपालका लागि १ जनालाई पुरस्कार र १ जनालाई सम्मान प्रत्येक वर्ष प्रदान गर्ने ।
६. भाषाभाषी (मातृभाषा) साहित्य अन्तर्गत वर्षमा दुई वटा पुरस्कार प्रदानको लागि व्यवस्था गर्ने ।
७. समयानुकूल र स्थानअनुकूल बनाई विश्वनेपाली साहित्य सम्मेलन एक कार्यकालमा एउटा गर्ने ।
८. **'जहाँ नेपाली, त्यहाँ सञ्जाल'** नामक अभियान चलाई नेपाली रहेका प्रत्येक देशमा सञ्जालको स्थापना गर्ने तथा त्यहाँ रहेका साहित्यिक संस्थासँग समन्वय गरी सम्बद्धता प्रदान गर्ने ।
९. **'साहित्य र सञ्चार, स्रष्टाको लागि स्रष्टाबाटै हेरचार'** कार्यक्रमअन्तर्गत कुनै पनि साहित्यकारको प्रगतिमा बधाई र दुःखद् घडीमा समवेदना दिन साथै बिरामी स्रष्टाका लागि सहयोगको कार्यक्रम ल्याउने ।
१०. आफ्नो पुस्तक वा सङ्ग्रह प्रकाशन गर्न चाहने तथा कुनै पनि कृति प्रकाशन गर्न चाहनेलाई प्रोत्साहन, सल्लाह र सहयोग गर्ने ।

### नियमित कार्ययोजना

१. यस सञ्जालका नियमित गतिविधिको अभिलेख राख्नका लागि त्रैमासिक/चौमासिक मुखपत्र प्रकाशन गर्ने साथै सञ्जालको वेभपेजमा नियमित अपलोड गर्ने ।

२. अघिल्ला कार्यसमितिले गरेका राम्रा कार्ययोजनाहरूलाई निरन्तरता दिने ।
३. विभिन्न अवसरहरू - जन्मजयन्ती, साहित्यिक चाडपर्वहरूमा नियमित तवरले साहित्यिक कार्यक्रमहरू गर्ने ।
४. यस सञ्जालको आजीवन सदस्यता विस्तार गर्ने ।
५. विभिन्न माध्यमबाट देशविदेशका स्रष्टा, सर्जकहरूसँग सम्पर्कमा रहने ।

## दीर्घकालीनः

१४. घरदेशदेखि भौगोलिक दूरीमा रहेका कारण तथा अज्ञानताको कारण विदेशमा रहेका कतिपय नेपालीहरूले आफ्ना बालबालिकालाई नेपाली तथा मातृभाषा सिकाउने नगरेको अवस्था पनि छ। यसर्थ, उनीहरूलाई नेपाली भाषा तथा मातृभाषा कला, संस्कार र संस्कृतिका बारेमा संचेतना दिनका निम्ति विभिन्न क्रियाकलापहरू गर्ने ।
१५. नेपाली साहित्यलाई विभिन्न अन्य भाषामा अनुवाद गर्ने, साथै दुई विशाल छिमेकी मुलुक चीन र भारतमा बोलिने भाषा, साहित्यसम्म न्यूनतम पहुँच राख्न प्रयत्न गर्ने ।
१६. नेपाली राष्ट्र नै भाषा हो । हामी नेपालीहरूको एकताको माध्यम भाषा हो भने हाम्रो भाषिक एकताका प्रतीक आदिकवि भानुभक्त हुन् र उनको भग्नावशेष जन्मस्थलको पुनर्निर्माण तथा संरक्षण गरी साहित्यिक पर्यटक स्थलका रूपमा विकास गर्न सरकारलाई सुझाव, सहयोगसहित दबाब दिने ।
१७. प्रवासी नेपाली साहित्यलाई पनि नेपालको विद्यालय तथा विश्वविद्यालयको पाठ्यक्रममा समावेश गर्न नेपाल सरकारको सम्बन्धित विभागमा सुझाव तथा दबाब दिने ।
१८. प्रवासी नेपाली साहित्य सिर्जना र स्रष्टा अर्थात् समग्र नेपाली डायस्पोरिक साहित्यका सम्बन्धमा स्नातकोत्तर तह (Master's Level) र विद्यावारिधि तह (Ph. D.) का अनुसन्धानकर्ताहरूलाई प्रोत्साहनका लागि यथासम्भव विभिन्न सहयोग गर्ने, साथै खोजकर्तालाई हाम्रो सञ्जालको तर्फबाट सम्मान तथा कदरपत्र प्रदान गर्ने ।
१९. विभिन्न देशमा काम गर्ने स्रष्टाहरू नेपाल आएको अवसरमा हाम्रा प्रतिनिधिहरूले उहाँहरूसँग नियमित दुःख, सुख र साहित्यिक अवस्था एकआपसमा बाँड्न **स्रष्टा सम्वाद** नामको कार्यक्रम सञ्चालन गर्ने ।
२०. प्रवासमा रहेर प्रकाशन भएका/गरेका कृतिको कम्तिमा एकदुई प्रति जम्मा गरेर नेपाली डायस्पोरिक साहित्यका निम्ति अध्ययन तथा आदानप्रदानमा मद्दत पुगोस् भन्ने उद्देश्यले पुस्तकालयको व्यवस्था गर्ने ।

## प्रस्तावित नाम

१. **विश्व नेपाली साहित्य महासंघ** वा अन्य कुनै ।

## प्रस्तावित वेभ साइटको नाम

**www.nepal**iliterature.org वा अन्य कुनै।

## निर्माणाधीन सञ्जालका आधारभूत प्रस्तावित रणनीतिहरू

१. देशदेशमा शाखाहरू बन्नेछन्, साथै कुनै पनि देशमा सञ्चालन भई रहेका साहित्यिक संस्थालाई समेत सांकेतिक शुल्क लिएर सम्बद्धता दिन सकिनेछ ।
२. मुख्य कार्यालय नेपालमा रहनेछ । कारण - सबैलाई र सधैँलाई सजिलो हुनेछ, कसैको वर्चश्व देखिनेछैन । नेपाल त जोकोही जान सक्दछन् ।
३. यो संस्था नेपालमै विशिष्ट हैसियत हुने प्रकारले दर्ता गरिनेछ । गैरआवासीय नेपाली संघ दर्ता भएझैं हुनेछ र यस संघसँग नजिकको सम्बन्ध कायम गरिनेछ ।
४. कामकाजको मुख्य भाषा नेपाली हुनेछ । कारण - सजिलो र आफ्नो माटोको भाषाको सम्मानार्थ, तर विधान, आचारसंहिता, घोषणापत्रलगायतका महत्त्वपूर्ण दस्तावेजहरू नेपाली र अन्तर्राष्ट्रिय भाषा अंग्रेजी, स्पेनिस, रसियन आदिमा अनुवाद गरिनेछ ।
५. संस्थाको हिसाबकिताब मुख्य गरी नेपालीमा र आवश्यकताअनुसार अङ्ग्रेजीलगायतमा देखाइने/राखिने छ ।
६. **संस्थापकः** भानुजयन्ती भेला वा कुनै समारोह वा कार्यक्रमको नाम रहनेछ । कारण- नेपालीभाषीको एकताको प्रतीकका रूपमा भानुजयन्ती स्थापित भइसकेको छ ।
७. केन्द्रीय कार्यसमितिको कार्यावधि ३ वर्षको हुनेछ ।

८. नयाँ कार्यसमिति निर्माण हुँदा अघिल्ला कार्यकारी पदाधिकारीमध्येका एकजना चाहिँ अनिवार्य यथावत् पदमा वा कार्यकारी पदाधिकारीकै रूपमा **सक्रिय अनुभवी सदस्य** (सअस) Early Committee Exporties (ECE) राखिनेछ । यसको छनोट अघिल्लो कार्यकालमा सबैभन्दा धेरै काम गरेका व्यक्तिमध्येबाट तोकिनेछ । किनकि - टाढाटाढा रहेर काम गर्नुपर्ने भएकाले सबै नयाँ पदाधिकारीहरूमात्र रहँदा अलमलमा पर्न सक्छन्, त्यसैले यसको व्यवस्था गरिएको हो । यस पदका लागि अघिल्लो समिति वा निर्वाचन आयोगले तोक्नेछ । समितिलाई सहयोग, सल्लाह दिँदै सतर्क गराउनेछ । नैतिक अधिकार उपाध्यक्षसरह हुनेछ, तर समिति निरन्तर सञ्चालन भइरहेको अवस्थामा यो पद सक्रिय हुनेछैन । एक वर्षभन्दा बढी समितिले कुनै काम नगरेको अवस्थालाई निस्क्रिय भएको मानिनेछ । एक व्यक्तिले सअसको जिम्मेवारी दुई कार्यकालभन्दा बढी निरन्तर लिन पाउनेछैन । यस्तो पदाधिकारीको नामको पछाडि सअस वा ECE लेखेर जनाइनेछ ।

९. संस्थाको अध्यक्षले लगातार तेस्रो पटक जिम्मेवारी बहन गर्नेछैन, तर अर्कैको एक कार्यकालपछि पुनः अध्यक्ष हुन पाउने अधिकारलाई भने रोक लागेको मानिनेछैन ।

१०. केन्द्रीय समितिको मतदान वा चुनाउमा - **एक शाखा एक भोट गर्ने र आजीवन सदस्यहरूको दस भोटलाई एक शाखासरह मान्ने ।** वा (एक शाखा, एक भोटको १०० अंक र सम्बद्ध संस्थाको एक भोटको ५० अंक हुनेछ भने एक आजीवन सदस्यको एक भोटको १० अंक मान्यता हुनेछ) शाखा स्थापना भएको कम्तिमा ६ महिना र कम्तिमा दुई वटा सार्वजनिक कार्यक्रम गरेको हुनुपर्नेछ, तब मात्र शाखा/सम्बद्धता प्राप्त संस्थाले भोट दिन पाउनेछ । निर्वाचन आयोगले तोकेको मितिभित्र बनेका आजीवन सदस्यले भने तत्कालै भोट दिन पाउनेछन् ।

११. सम्बद्धता प्राप्त संस्थाले पनि यस सञ्जालको केन्द्रीय समितिको चुनावमा भोट दिन र पुरस्कार तथा सम्मानका लागि उपयुक्त व्यक्तिको नाम सिफारिस गर्न पाउनेछ ।

१२. कम्तिमा १० वटा मुलुकमा रहेका नेपाली साहित्यका स्रष्टाहरूको संलग्नता रहेपछि मात्र सामूहिक रूपबाट यो संस्थाको स्थापना भएको घोषणा गरिनेछ । यस सञ्जाल स्थापना भएको घोषणासँगै विधान निर्माण समिति निर्माण गरी व्यापक र उपयुक्त विधान बनाई लागू गरिनेछ ।

१३. यो संस्था सामूहिक रूपबाट व्यापक आवश्यकता महसुस भएको कारण स्थापना हुनेछ, कुनै पनि संस्थाका विरुद्धमा निर्माण हुनेछैन । जुनसुकै साहित्यिक संस्थामा आबद्ध व्यक्ति यस सञ्जालमा संलग्न हुन सक्नेछन् ।

१४. हामी **नेपाली** र हामीले बोल्ने धेरै/सबै भाषा, साहित्य नै **नेपाली** साहित्य हुन् । त्यसैले **नेपाली साहित्य** र **नेपाली भाषा साहित्य** दुवैको श्रीवृद्धिका लागि यो सञ्जाल काम गर्नेछ ।

यस नयाँ संस्थाको स्थापना गर्नुभन्दा यसलाई निरन्तरता दिनु निश्चय नै चुनौती हो, तर हामीसँग केही महत्त्वपूर्ण आधारहरू छन् । त्यसैले पनि यो संस्था चीरस्थायी सञ्चालन हुने कुरामा कुनै शङ्का छैन । अन्य संस्थाहरूको सहअस्तित्वलाई स्वीकार गर्नु, साझा र पारदर्शिता अपनाउने प्रतिबद्धता हुनु, व्यक्तिवाद, देशवाद, नातावाद, क्षेत्रवाद र राजनीतिबाट टाढा रहने प्रकारको व्यवस्था हुनु आदि यस निर्माणाधीन संस्थाका मुख्य आधारहरू हुन् ।

यस संस्थाले सम्बन्धित सबै निकाय र व्यक्तिहरूबाट सहयोग, सद्भाव र आशीर्वाद बटुलेर नेपाली साहित्य, स्रष्टा र नेपाली प्रतिष्ठाको निमित्त यथासम्भव सम्पूर्ण काम गर्नेछ । शुभारम्भमा यस सञ्जालले सानो काम, थोरै काम तर महत्त्वपूर्ण र अरूबाट छाडिएको वा अरूले नभेटेका, नदेखेका कामहरू गर्नेछ । यस सामूहिक कामका लागि सामूहिक सहभागिता होस् भन्ने आग्रह गर्दै, एकता नै बल हो भन्ने मान्यतालाई पुनः दोहोर्‍याउँदै, हाम्रो यस निम्तोलाई स्वीकार गर्नुहुनेछ भन्ने आश राख्दछौं ।

biswasdip@ymail.com ब्रुनाई

*(निर्माणाधीन सञ्जालका लागि छलफल समूहलाई प्राप्त सल्लाह, सुझावका आधारमा तयार पारिएको)*

# बेलायतका साहित्यिक तीर्थस्थलहरु घुम्दा

विश्वासदीप तिगेला
सर्नकिल्फ, केन्ट, बेलायत



नेपालबाट डा. गोविन्दराज भट्टराईको इमेल आयो । इमेलमा उहाँले बेलायतप्रवेशका बारेमा केही जिज्ञासा राख्नुभएको थियो ।

इमेलको प्रत्युत्तरमा मैले 'बेलायती भीषाको समयावधि भीषा लागेकै दिनबाट सुरु हुन्छ, प्रायः अन्य मुलुकहरूमाचाहिँ देशको सीमाभित्र छिरेपछि मात्र सुरु हुन्छ । त्यसैले तौरतरिका अलि फरक छ' भनेर लेखें । साहित्यका एक विशिष्ट व्यक्ति बेलायत घुम्ने योजना बनाइरहनुभएको छ भन्ने कुराको जानकारी पाउँदा मलाई औधी खुसी लाग्यो । स्वयम् म पनि साहित्य पढ्न मन पराउने व्यक्ति भएकाले उहाँलाई समयतालिका दिएर बेलायतमा घुम्न आउने निम्तो गरें ।

साँझ ६.३० बजे म र साथी गोपी लण्डनको हिथ्रो एयरपोर्टमा स्वागत गर्न पुग्यौं । नेपाली साहित्यका भण्डार डा. गोविन्दराज भट्टराई हाम्रो स्वागतका फूलगुच्छालाई छातीमा टाँस्दै मुस्कुराउनुभयो । बेलायतवासी स्रष्टासर्जक तथा नेपाली दाजुभाइ दिदीबहिनीहरूले विभिन्न कार्यक्रमको आयोजना गर्दै उहाँलाई स्वागत गर्नुभयो । उहाँको बेलायतयात्राको क्रममा अङ्ग्रेजी साहित्यका जगमध्येका एक सेक्सपियरको जन्म ठाउँ जाने पनि कुरा चल्यो ।

टाढाटाढाबाट आएर पशुपतिको दर्शन गरेर आफूलाई पुण्य प्राप्त भएको महसुस गर्नु आ-आफ्नो अनुभूतिमा निर्भर रहने कुरा हो । सबैको एउटै अनुभूति हुँदैन । मलाई भित्री मनबाटै खुसीले उचालिरहेको थियो । म स्वयम् नयाँ ठाउँ घुम्न पाउँदा औधी रमाउने मान्छे । साहित्यिक ठाउँ स्टार्टफोर्ड अपन-एभन, जहाँ सेक्सपियर जन्मिएका



(सेक्सपियरको जन्मघर)

थिए, त्यहाँ घुम्नका लागि साहित्यका विशेष व्यक्तित्व पाहुनासँग जाने तयारी पूरा भइसकेको थियो । भोलि बिहानै बाटो लाग्नुपर्ने भएकाले इन्टरनेटमा बाटोको योजना (रुट प्लान) बनाउन सुरु गरेँ ।

हामी मान्छेहरूका आ-आफ्ना सोचाइ र स्वभाव हुन्छन् । केही वर्षअघि भगवान् बुद्ध जन्मेको ठाउँ लुम्बिनीको जन्मस्थलमै एकरात बिताउने सोच आयो । र, घरदेश पुग्नेबित्तिकै योजनाअनुसार त्यसतर्फ लागेँ । त्यसवखत एकरात लुम्बिनीमा बिताउँदा म आनन्दले गद्‌गद् भएको थिएँ । सेक्सपियरको जन्मथलो घुम्ने योजनाले मलाई त्यसरी नै खुसीका दवाब दिइरहेका थिए । इन्टरनेटले सेक्सपियरको जन्मस्थल सोचेभन्दा धेरै टाढा रहेको कुरा नक्सामा देखायो, म ठूलो सङ्कटमा परेँ । पाहुनालाई म आफैँ घुमाउन लैजान्छु भन्ने मनसायले थुप्रै स्रष्टा साथीहरू भए पनि कसैलाई जिम्मेवारी दिएको थिइनँ । त्यति टाढा कारमा जान असम्भव भएकाले म के गरूँ, के गर्नु भएँ । त्यस साँझ पाहुना मेरो वासस्थान फक्स्टोनभन्दा टाढा फान्ब्रोस्थित अर्कै साथीको घरमा हुनुहुन्थ्यो । मैले सोचेको अपन-एभन स्टोनहेजनजिकको नभएर बर्मिङ्घम नजिकको रहेछ । पाहुना मसँगै भोलि त्यस ठाउँमा जान दुक्कसाथ तयारीमा हुनुहुन्थ्यो, तर त्यो धेरै टाढा भएको कारण फक्स्टोनबाट पाहुना रहेको फान्ब्रो पुगेर शेक्सपियरको जन्मस्थल पुग्न सम्भव थिएन । ज्यादै सावधानीका साथ भाइ टङ्कलाई फोन गरेँ । उनसँगै उनकै घरमा हाम्रा साहित्यिक पाहुना हुनुहुन्थ्यो । उहाँलाई स्रष्टाहरूको घरमा मेजमान खान भ्याइनभ्याइ थियो । मैले यावत् कुरा बताए । अन्ततः टङ्क आफैँले रेलबाट पाहुनालाई घुमाउने निधो भयो । एउटा ठूलो विपत्तिको समाधान भयो, तर महत्त्वपूर्ण व्यक्तिसँग महत्त्वपूर्ण ठाउँको यात्रा गर्ने योजना पूरा नहुने भएकाले टाउकोमाथि ढुङ्गा राखिएझैँ गह्रौँ भइरह्यो । भविष्यमा कसैगरी त्यो साहित्यको पवित्रस्थल घुम्न जानेछु भनी वाचा गर्दै मन शान्त पार्ने कोसिस गरेँ तर मनभित्रको अर्को मान्छेले भनिरह्यो-तिमी एक्लै जानुको के महत्त्व ? साहित्यका विशिष्ट व्यक्तिसँग जाँदाखेरीको जस्तो त पक्कै हुनेछैन । त्यो असन्तुष्टिको भारीले मलाई तानिरह्यो ।

पाहुना शेक्सपियरको जन्मस्थल घुमेर मेरो वासस्थानमा फर्कनुभयो र भन्नुभयो, भाइ त्यो ठाउँ साहित्यको महत्त्वपूर्ण तीर्थस्थल हो । सँगै जान सकिएन, भविष्यमा एकपटक जानू है । उहाँको त्यो भनाइले मेरो मन झन् कुँडियो । तपाईंको आशिष लागोस्, म एकदिन अवश्य जानेछु भनी मैले प्रतिबद्धता जाहेर गरेँ ।

बेलायतयात्राको शुभारम्भमा उहाँलाई एकदिन क्यान्टवरी घुमाउन पनि आफैँले लैजाने वाचा गरेको थिएँ, भाइ हिपेन्द्र, म र पाहुना क्यान्टवरी क्याथिड्रोलभित्र छिर्‍यौँ । पाहुनाको शिरमा भएको नेपाली टोपी खोल्न बूढी बोजुले आग्रह गर्नुभयो । विशाल क्याथिड्रोलको अर्को भागमा पुनः एक वृद्धले टोपी खोल्न आग्रह गरे । सम्भवतः त्यो चर्चभित्रको नियम हुनसक्छ ।

अङ्ग्रेजी साहित्यको सुरुवात भूमि अर्थात् शुभसाइतका महापुरुष जेफ्री चौसरको साहित्यिक कर्मभूमि क्यान्टवरी शहरसँग ठेलाठेल गर्दै आज पनि अस्तित्वमा रहेको क्यान्टवरी क्याथिड्रोलको इतिहास जति बुझ्यो त्यति नै बढी महत्त्वको लाग्नु स्वाभाविकै हो । इस्वी ५९६ मा रोमबाट आएका सन्त अगस्टिनले निर्माण आरम्भ गरेको विशाल चर्च अर्थात् क्याथिड्रोल त्यसबेला युरोपकै सबैभन्दा ठूलो मानिन्थ्यो । अहिले पनि बेलायतको सबैभन्दा पुरानो र विशाल क्याथिड्रोल यसैलाई मानिन्छ । सन् १९३५ को क्यान्टवरी महोत्सवको लागि लेखिएको नाटक 'मर्डर इन द क्याथिड्रोल" विश्वमै अमर कृति बन्नपुग्यो । उक्त नाटकले क्याथिड्रोल निर्माणको हजार वर्षपछि राजा हेनरी द्वितीयले ४ जना मान्छे लगाई तत्कालीन महान् सन्त वेकेटको हत्या गरेको कुरा उल्लेख गर्दछ । महान् सन्तको हत्या र हत्यापछिको घटना, परिघटनाले झनै यस क्याथिड्रोलको महत्त्व बढेको पाइन्छ ।

यहाँका अनगिन्ती आकर्षणहरूमध्ये नेपालको भानुभक्तले रामायण लेखेझैँ अङ्ग्रेजी साहित्यको सुरुवातमा 'द क्यान्टवरी टेल्स'का महान् लेखक जेफ्रीका बारेमा जानकारी दिने घर पनि रहेको छ । सिङ्गो अङ्ग्रेजी साहित्य र शहर सभ्यताको सम्बन्ध क्यान्टवरी क्याथिड्रोलसँग अति महत्त्वपूर्ण छ । अङ्ग्रेजी साहित्यको सुरुवात अवस्थाका झन्डै २ दर्जन साहित्यकारहरू यसै शहरका रहेका छन् । जसअनुसार जेफ्री चौसर (१३३५–१४००), क्रिष्टफर मोर्ले (१५६४–१५९३), आइजेक वालटन (१५९३–१६८३), विलियम सोमनार (१६०६–१६६९), डानियल डेफो (१६६१–१७३१), जनाथन स्फेट (१६६७–१७४५), थोमस ग्रे (१७१६–१७७१), जेनी आस्टन (१७७५–१८१७), रिचार्ड ह्यारिस बाराम (१७८८–१८४५) जोन केट्स (१७९५–१८२१), चार्लिस डेकिन्स (१८१२–१८७०), जोसेफ कनरिड (१८५७–१८२४), मेरी आउटेन (१८३४–१९४८), समरसेट

मुगम (१८७४–१९६५), आई. एस. इलोट (१८८८–१९६५) र आयन फिल्मिङ (१९०८–१९६५) रहेका छन् । समग्रमा क्यान्टवरीलाई अङ्ग्रेजी साहित्यको राजधानी भन्न सकिन्छ र साहित्यमा चेतना हुने स्रष्टासर्जकका लागि भने यो ठूलो साहित्यिक तीर्थस्थल हो ।

पाहुना प्रोफेसर गोविन्दराजलाई उहाँको बेलायतयात्राको १९ दिने भ्रमणपछि गत सेप्टेम्बर ९ तारिखका दिन हिथ्रोबाट विदाईका हात हल्लायौँ र भाग्यवश उहाँको आशीर्वादले भनौँ त्यसको ठीक ९ दिनपछि म आफ्नो अफिसका स्टाफ लिएर एजुकेशनल भिजिट स्टार्टफोर्ड अपन-एभेन पुगें ।

विश्वप्रसिद्ध साहित्यकार सेक्सपियरको जन्मघरमा पाइला टेक्दा बुद्धको जन्मस्थल लुम्बिनी पुग्दाझैं आनन्द लाग्यो । मनकामना मन्दिरमा पुगेर फूल चढाएझैं मैले मेरो मनका कोपिलाहरू चढाएँ । सन् २३ अप्रिल १५६४ मा विलियम सेक्सपियर जन्मिएकै कोठाको सानो र पुरानो कोक्रोमा सुतिरहेका नानी सेक्सपियरलाई देख्दा साह्रै खुसी लाग्यो । विश्वप्रसिद्ध सेक्सपियरले परम्परागत ग्रामर स्कुलमा अध्ययन गरेर केही समय शिक्षक काम गर्दागर्दै उसबेला चलेको नाटकघरमा अकस्मात काम पाए र उनले स्टेजको पर्दा तान्ने, घोडा रुङ्ने काम गर्दागर्दै उनको अभिनय कलाले स्थान पाउँदै गयो त्यसपछि उनको प्रसिद्धी बढ्दै गएको कथाले मलाई निकै मर्माहित बनायो । सन् १६१० मा उनले जागिरबाट विदा लिएपछि उनको दिनचर्या लेखक बिन जोनसन क्रिष्टफर मार्लोसँग रक्सी पिउने होडबाजीमा बित्थ्यो । तब सेक्सपियरको जीवन निकै दुःखपूर्ण बन्दै गएको र एकमात्र छोरो पनि ११ वर्षको अल्पायुमै यस संसारबाट विदा भएपछि उनका कुनै पनि सन्तान बाँकी नभएको कथाले मलाई निकै पिरोल्यो । बेस्सरी रक्सी पिएर रूखको फेदमा कहिलेकाहीँ उनले रात काट्थे रे उनी । त्यसलाई 'क्यानपी अफ सेक्सपियर' भनिन्थ्यो रे । त्यो रूख भएको ठाउँ पत्ता लगाउने कोसिस गरेँ । सयौँ वर्षअघिको कुरा थियो, त्यो सम्भव हुने कुरै भएन । उनको जन्मघरमा राखिएका जानकारी अनुसार दर्जनौँ सुन्दर कृतिहरू हामीलाई छाडेर अन्ततः जन्मेकै दिन २३ अप्रिल १६१६ मा उनको देहान्त भएको थियो ।

साँझपख सेक्सपियरको जन्मस्थलमा रहेको कोर्टयार्ड थियटर झन्डै ७ सय मान्छेले टम्म भरिएको थियो । म मर्चेन्ट अफ द भेनिस नाटकलाई फिल्महलमा झैँ पर्दामा हेर्नुपर्ने भनी तम्तयारीमा थिए तर त्यहाँ फिल्म आउने पर्दा नभई परम्परागत मञ्च थियो । अब के होला जिज्ञासा जाग्न थाल्यो । सियो खसेको आवाज सुन्नेगरी हल शान्तमय बन्यो र नाटक सुरु भयो, म दङ्ग परे । मर्चेन्ट अफ द भेनिसको कथा केही थाहा भएकाले वुझ्न केही सजिलो भए पनि सबै बुझ्न गाह्रो भयो । किनकि त्यहाँ पुराना भाषा र शैली प्रयोग गरिएका थिए । त्यस अपन-एभनमा केन्याको नाइभाषा, फिजीको भिटिल्यू, बेलिजको सान्प्राधो, मलेसियाको कोटाकिनावालु, नेपालको ठमेलझैँ टुरिस्टहरूमात्र भेटिन्थे । प्राकृतिक सुन्दरता र ऐतिहासिक सुन्दरताको सङ्गम अपन-एभन शहर भविष्यमा फेरि घुम्न आउने रहर साँच्दै रातको अबेर सेक्सपियरको जन्मघर हुँदै अलिपर्तिर पुग्यौँ ।

गतवर्ष एजुकेशन भिजिटमा बेलायतको राजधानी लण्डनको पार्लियामेन्ट भित्र गई टोनी ब्लेयरझैं बनी नक्कल गर्ने मौका पाएका थियौं, तर यस पटक अलि भिन्न भयो । अपन-एभनको एक पुरानो रेस्टुरेन्टबाट कोठा जानका लागि बाहिर निस्किएलगत्तै यो चिकागो थिएटर पनि राम्रो रहेछ भन्दै मसँगै हुनुभएका दाइहरू रामकृष्ण, रामप्रसाद, कुमार, बहिनी क्याप्टेन इमेलीलगायत प्रेम र जय बेस्सरी हाँसेका थिए । जहाँ नाटक होइन, म्युजिक मच्चिमच्ची उफ्रिरहेको थियो ।

बिहान ब्युँझिएर हामी अपन-एभन नजिकको वारविकको हटन लकमा पुग्यौँ । पानीमा चल्ने न्यारोवोटहरू उकालो डाँडा चढेको देखेर म दङ्ग परेँ । रेल र कारको बाटो बन्नुअघि बर्मिङ्घम र लण्डन आवातजावतका लागि बनाइएको क्यानल अझै पनि सञ्चालनमा रहेछ । लण्डनबाट ३ हप्तामा वर्मिङ्गम पुग्ने कुरा क्लाइभ इ.आर.प्रितडले जानकारी गराए । कुरा मिलाएर बोल्न साह्रै सिपालु क्लाइभका अनुसार साँगुरो पानीको बाटोमा न्यारो वोर्ड चलाउने सिद्धान्तचाहिँ हो 'नो रस्ट, नो फस्ट, दयाट इज अस ।'

दिन ढल्दै गयो, हाम्रो छायाँ लामालामा बन्न थाले । साहित्यिक तीर्थस्थलको यात्रा राम्रो भयो- सबैको एकै स्वर थियो । हामी सबै आ-आफ्नो बाटो लाग्यौं । बेलायतमा साहित्यिक दृष्टिकोणले घुम्ने ठाउँहरू अरू धेरै छन् । यथासक्य ती सबै ठाउँहरू घुम्नु छ । ती पवित्रभूमिहरूलाई चुम्नु छ । साहित्यको पाटो पनि एउटा हल्ला गर्ने पाटो रहेछ, मनमा धेरै कुराहरू खेलिरहे । एकदिन यही पवित्रस्थल स्टार्टफोर्ड अपन-एभेन र क्यान्टवरी शहरमा नेपाली मन र मुटु बोक्ने नेपाली साहित्य नेपाली भाषामा, मातृभाषामा र अङ्ग्रेजी भाषामा पाठ गरेर हामी उत्सव मनाउने रहर साँच्दै ओह्रालो बाटो लाग्यौं । ऐतिहासिक ठाउँ छलिए, सुन्दर ठाउँ छलिए, तर पनि म मेरो गन्तव्यतर्फ निरन्तर अघि बढिरहेको छु ।

# आखिर खोला म, खोला नै रहें

सुरेशजङ्ग शाह

धेरै आए
धेरै गए
आउने जाने.......... भइरहे
कोही................. पारि तरे
कोही.................. वारि कुरे
तर्ने कुर्ने............. भइरहे
कति ................. साउन आए
कति................. भदौ आए
**आँधी आए**
**बेहरी आए**
**भेल आए**
**भल आए**
**झरी आए**
**वर्षा आए**
**बाढी आए**
**पहिरो आए**
आउने जाने............ भइरहे
कसैले..........कुना खोर्साए
कसैले..................किनारा धस्साए
आकार बिगारे
आकृति बिगारे
स्वरूप बदले
सौन्दर्य बदले
बिगार्ने बदल्ने........... भइरहे
घटाउने, बढाउने हिसाबमा
म
त
सधैं
पछि........... परिरहें

खहरेको लल्कार पनि
नसहेको होइन
साउने भेलको हुङ्कार पनि
नखपेको होइन
फेरि
पनि
जङ्गार......... तर्नेले
रूखो......... रूखो मन गरेपछि
मेरो
के............. लाग्थ्यो र!
मायाले हरक्कै उघ्रेर भनौं
या
मायाले लरक्कै पग्लेर भनौं
धर्तीमै बिछौना बनेर
बगिदिंदा पनि
निर्दयी पाउहरू
कुल्चन........मात्रै
रुचाउने भएपछि
मेरा...............लागि
वेदना............सहनु
सिवाय!
अरू
के
बाँकी........ रहन्थ्यो र!
आउने-जानेको क्रममै भनौं
एउटा
यात्री
उनी
पनि

आइन्
निकै राम्री
चिटिक्क........ परेर
पुतलीझैं......... फरर हात हल्लाउँदै
छेउमै पुगिन्
र
किनारामै.......... एक छिन् बसिन्
म
मायाले फुरुक्क...... फुर्किएँ
र
मुसुक्क..............मुस्कुराएँ
प्रतिउत्तरमा.........उनले
हल्का कपाल मिलाइन्
अलि गाजल र टीका मिलाइन्
अनि
हल्का ओठ चलाइन्
सायद
लिपिस्टिक मिलाएकी होलिन्
म
प्रतीक्षामै थिएँ!
उनी पानीभित्रको छायामा
आफ्नो सौन्दर्य
नियालीरहेकी थिइन्
अनि
केही क्षणमै
केही पहिरन.............खोलिन्
केही पहिरन...............घुँडासम्म
सिमोठिन्

र
कल्च्याङ कुल्चुङ............. कुल्चँदै कुल्चँदै
हाइ..............!
हेलो...............!
केही पनि नगरी
सर्लक्कै.......... तरेर
एकै छिन्मा............. पारि पुगिन्
र
कसैको हात समाएर
खिलिली.......... हाँस्दै
क्रमशः........ टाढिँदै गइन्
म
निरीह......... टोलाइरहे
आँखाले देखिन्जेल..........हेरिरहें
उनका प्रत्येक ................ पदचापहरूले
मेरो छाती ........... धस्सिरहेको थियो
उनका प्रत्येक ............पाइलाहरूले
मेरो मुटु............... छिचोलिरहेको थियो
उनलाई के थाहा...........?
मेरो प्रतीक्षा ..............कति लामो थियो
उनलाई के थाहा .............?
मेरो चाहना................ कति गहिरो थियो
उनलाई के थाहा........... ?
मेरो आशा............ कति उज्यालो थियो
उनी
त
यात्री
हेर्दाहेर्दै............ अदृश्य भइन्
आखिर............. खोला म
खोला नै रहें............!

(लेखक शाह नेपाली साहित्य विकास परिषद्, यू.के.का महासचिव हुनुहुन्छ।)

# हाम्रो देश र हामी

हरिसिंह थापा



**हिमाली हावा हरिया फाँट**
**डाँफे र मुनाल मयुरको नाच**
**हरिया डाँडा कञ्चन पानी**
**सुन्दर देश आँखाको नानी**

के छ र कमी यो देश हाम्रो
सौन्दर्य छर्छ विश्वमा राम्रो
आकार सानो भएर के भो
विश्वको शिर शिखर हाम्रो

सोभा र सरल बहादुर जाती
कहिले नझुक्ने नेपाली हामी
सुख र दुःख जीवन ठानी
मेहनत गर्ने सारै स्वाभिमानी।

आफ्नै छ भाषा आफ्नै छ भेष
विरताले सधै ठाडो छ शीर
शान्तिका प्रीय गौरव शाली
सीता र बुद्ध स्वयम् छन् साक्षी

(लेखक थापा नेपाली साहित्य विकास परिषद्, यू.के.का अध्यक्ष हुनुहुन्छ।)

# COLORFUL FISH

**HARI SIWAKOTI**



A few colored fish
Confined in an artificial four sided ocean
flowing and running here and there
There and here

Something to Atlantic
Something to pacific
Next times to Indain
Other time to Antarctic and back to Atlantic again,
There fish

For these fish,
There are only a few human occupied lands
There are only longitudes and latitudes of geography
But no waves on the sea share
No sail boats of honeymoons
No pearls on the depth of ocean
No submerse of war machined equipped

How pure and peace living they are !
How free and democratic they are !
These colored fish.

They don't know the A, B, C of revolution, and what is peace
They don't know who is Buddha
Neither they know what is Hindu, Muslim , Christians ,
Nor they need to know .

They themselves are calm abide by law and order
They don't need passport of visa
To go from one ocean to the other

They don't know
Hindu and Muslim are fighting in one Island
Buddhist and Christian are fighting in other Island
Jews and Hamas are fighting
men are chopping head of other man

They don't know two construction of one world
Pestle against love
]missile against peace and motherhood
fighter planes against freely flying Dover and
They don't see the cyclone of bombs

In a closed door, confined in a small transparent Ocean
they have become the object and enjoyment for the man
surviving with artificial food in a prison
surviving in a four cornered aquarium ,
in this artificial Ocean
These fish moving here there.

# गीत

हरि शिवाकोटी

किन मलाई वैराग्यको बिहानीले छोप्छ
जति घाम बढ्दै जान्छ मुटु मेरो घोप्छ

साँझ हुन्छ बतासमा तिम्रो स्पर्सले
सताउँथ्यो आलिङ्गनको मीठो कल्पनाले
जूनजस्ती लाग्थ्यौ तिमी ताराहरूबीच
आँसु पनि झर्छन् रातमा त्यै पीरतिसित ॥

यौटा चिनो मलाई तिम्ले नबिर्सिने दियौ
माया फुल्ने मन्दिरलाई दियोकलशले सियौ
तिम्ले संसार स्वीकार गर्ने इसाराले डाक्यौ
एकै क्षण नि नबिर्सने देउरालीलाई भाक्यौ ॥

**तिम्रो मुस्कान अँध्यारोमा दिउँसै जस्तो लाग्छ**
**वैरागिँदा झस्किएर वास्तविकता भाग्छ**
**अनगिन्ती जिन्दगीका घुम्ती वरिपरि**
**काँडा भयो तिम्रो मेरो सिमानाको दूरी ।**

**(गीतकार शिवाकोटी अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, बेलायत च्याप्टरका अध्यक्ष हुनुहुन्छ ।)**

# क्यान्टोनमेन्टको कासन

अशोक सुवेदी
ashokpdsubedi@hotmail.com



विचारको बारुदमा रगतका छर्रा घोलेर
बनाएका थियौं हामीले मस्तिष्कलाई नै एम्बुस
हाम्रा जिजु र बाजेले काटेको कहर
हाम्रा ज्यामै र आमैहरूले पिएको जहर
आमा, दिदी र बहिनीहरूको लुटिएको यौवन
बढ्न नपाएर टाक्सिएका युवाहरूको भ्याउरे बैंस
सबैसबैको अन्तरघुलन बनेको थियो हाम्रो विप्लव
आँसुका ढिक्काहरू गोली बनेर पड्किएका थिए
पिलिएको मन र सुकेको आँत
पत्थर फोरेर निस्किन खोजिरहेको बीजझैं
निशा चिर्दै धर्तीमा स्वतन्त्र विचरण गर्न चाहिरहेथे
युगलाई गिज्याउने एउटा हुकुमी शासन
आफ्ना पुर्खाको अस्तु कोच्याउँदै थियो
र आफ्ना दुर्गन्धित खुट्टामा दाम चढाउन लगाउँदै थियो
बन्दुकको नालले दमित मानवहृदय
चाहिरहेको थियो विस्फोट हुन निरन्तर
बनिरहेका थिए हाम्रा शरीरहरू पनि मनमस्तिष्कसँगै
प्रज्वलित लाभा र विस्फोटक डाइनामाइट।

मानवतालाई उपहास गर्दै अट्टाहास गरिरहेको
र जाग्रत चेतना कैद गरौं भन्ने भ्रममा परिरहेको
नरभक्षकका दिवास्वप्न भताभुङ्ग पार्दै
पड्किएका थियौं हामी वर्गसङ्घर्षको भीषण मोर्चामा
ढल्दै थिए अपराधको जगमा खडा भव्य महलहरू
र धर्मराइरहेका थिए षड्यन्त्रका पर्खालहरू।

दुष्ट हतियार फेरिँदै थिए मानवताका पक्षमा
र चुलिँदै थियो अपराजित विश्वास- बारुदको भण्डारसँगै
म्यागेजिनका पटुका बाँधिएका कम्मरहरू
गोलीका पोते लगाएका सहयोद्धाहरूले
जुरो बनाएका थिए बम र बारुदको
सहयोद्धाका रगतले सजाएका सिउँदाहरूबाट
निरन्तर उर्लिरहेका थिए रक्तभेलहरू
आफ्नै रगतले बनेका नदी र खहरेहरू
आफ्नै मृत साथीका शवको फड्के बनाएर तर्दै
दुश्मनको बङ्कर खाली गराउन कुद्दै थियौं लालरक्षकहरू
ढलेका महल र चर्केका पर्खालहरूबाट
कराइरहेको थियो अत्याचारको पाप र अपराधको शृङ्खला
भाग्दै थियो अन्धकार/फाट्दै थिए काला बादलहरू
यात्रा झन् वेगवान् बन्दै थियो
फुटेका चुरा र पुछिएका सिउँदाहरू
आँखाबाट झरेका बलिन्द्र धारा आँसु
उकुच पल्टिएका नीलडाम र खतहरूसँगै मिलेर
तयारी गर्दै थिए विजयोत्सव मनाउने
केही हजार आफन्त गुमे पनि करोडौंकरोड आफन्तका अनुहार
बिहानीको लालीझैं खुल्दै थिए
आहा, कति सुन्दर लेखिँदै थियो इतिहास
च्यातिँदै थिए भ्रम, जाल र षड्यन्त्रका हतियारहरू
र लेखिँदै थिए- वीरता र बलिदानका गाथा
जसले आफ्नो वर्गका लागि रगत रोप्यो
उसकै नाममा बन्दै थियो अमर इतिहास...।

तर

तर आज, विस्मित बन्दै छन् अश्रुपुरित यी नयनहरू
धमिलो-धमिलो बनिरहेको छ दृश्य
मूर्दाझैं बनेका छन् हिजो चट्याङझैं गर्जने बन्दुकहरू
खिया लाग्न थालेका छन् हाम्रा हात र हतियारमा
लाग्छ- हाम्रो विचारको बारूद र रगतको छर्रा
चुरापोते फालेर म्यागेजिनको पटुका बाँधेको लाल-लाल वर्तमान
हलोको फाली र खलातीको हतियार बनेको छ आज
क्रमशः अतीत र विगत बन्दै छ
हामी क्रमशः कुरूप इतिहास बनाइँदै छौं
र डिस्पोज हुँदै छौं हामी विस्फोटकबाट।
गिज्याइरहेको छ हाम्रो जीवनसँग साटेको हतियारले
हाम्रो अन्यमनस्कता देखेर
खुच्चियुँ गरिरहेका छन् दुष्टहरू कुम नचाएर
कसले छेक्यो हाम्रो उदाउन लागेको लालप्रभातलाई ?
कसले रोक्यो हाम्रो यो तीव्र वेगमय यात्रा ?
हजार बाधा र प्रतिकुलतालाई मिच्दै/जित्दै
टेकिसकेका थियौं हामीले विजयको सगरमाथामा पाइलो
कसले मार्‍यो छिर्किनी र खसालिदियो हामीलाई
फेरि झट्ट निस्कन मुस्किल पर्ने खरपासामा ?
कसले काटिदियो हाम्रो कम्मरको डोरी ?
र कसले हालिदियो हाम्रा आँखामा खुर्सानीको धूलो ?

हामी 'स्वर्ग' बनाउन चाहन्छौं सिङ्गो धर्तीलाई
र, पूर्ण मान्छे बनाउन चाहन्छौं आधा र चौथाई मान्छेहरूलाई
कसले बाँध्दै छ थाहै नपाई क्रमशः हाम्रा खुट्टामा नेल र हातमा सिक्रीहरू ?
कुँजिएका खुट्टा र हातहरूले
फेरि झट्ट कसरी जित्न सकिन्छ यो महान् म्याराथुन ?
नोजल र ट्रिगरमा जालो लागिरहेका दृश्यले
मडारिइरहेको छ हाम्रो विजयी चेतना।

यो क्यान्टोनमेन्टको यन्त्रवत् जडता र शून्यता
बिच्क्याउन खोज्दै छ हाम्रो रातो वर्तमानलाई
र पार्न खोज्दै छ विगत तातो वर्तमानलाई
यो शिविरको कष्टपूर्ण पल
गिज्याइरहेछ हाम्रो सुपरएक्स्प्रेस यात्रालाई
यो मूर्दाघर कुर्नुभन्दा
हामी फेरि आफ्नै चिहान खन्न इच्छुक छौं
जहाँबाट जन्मन्छ रातो सूर्य
यो अस्पष्ट र चिप्लेकीराको गति
जिस्क्याइरहेछ हाम्रो हात्ती र चितुवाको वेगलाई
र सिकाइरहेछ हामीलाई उल्टो यात्रा हिँड्न।
क्यान्टोनमेन्टका यी बन्धनहरू
बाधक बन्दै छन् हाम्रा मुक्तिपथका
यो सन्नाटा र तन्द्रालाई भङ्ग गर्दै
हामी हाम्रै चिहानमा बसाल्छौं सुन्दर बस्ती
यसका लागि हामीले फेरि विशाल पार्नुपर्छ छाती
र, चिहानमा पुरिएका हाम्रा सहयोद्धाका सपना सम्झँदै
फोर्नुपर्छ कन्टेनरको ताला
र, फोर्नुपर्छ तालाबन्दी मस्तिष्कहरू पनि बज्र हानेर
हामी सगर्व फेरि घोषणा गर्न आतुर छौं-
हामी क्यान्टोनमेन्टको यो अन्धकार र छट्पटीबाट पनि
देखिरहेछौं सुन्दर विप्लव र त्यसपछिको सुन्दर जीवन
हाम्रो जीवनझैं सुन्दर विप्लव जारी छ
शिखरमा पुग्ने रक्तमेलपूर्ण महान् यात्रा जारी छ।

००

**(सुवेदी मार्क्सवादी साहित्य प्रतिष्ठानका अध्यक्ष हुनुहुन्छ।)**

biswasdip@ymail.com 29 Oct 2020 UK



# *'गीतसङ्गीतले मानिसका पीर-व्यथा बिर्साउँछ।'*

– राजु शाह, सङ्गीतकार

*राजु शाह नेपाली साङ्गीतिक आकाशका एक उदीयमान सङ्गीतकार तथा सम्भावना बोकेका गायक हुन्। 'रेन्ज' एल्बमबाट चर्चा पाएका शाह यतिबेला अर्को एल्बमको तयारीमा छन्। राजु शाहसँग **पुनम दाहालले** लिनुभएको छोटो भेटवार्ता यहाँ प्रस्तुत छ।*

**तपाइंको बाल्यकाल कहाँ बित्यो ?**

काभ्रेको कटुञ्जे गा.वि.स.-९ मा मैले मेरो बाल्यकाल बिताएँ।

**तपाईंले कहाँबाट कति शिक्षा हासिल गर्नुभयो ?**

मैले एसएलसी रोशी उ.मा.वि., कटुञ्जेबाटै गरें। ललितकला क्याम्पस, भोटाहिटीबाट आई.ए. उत्तीर्ण गरेपछि प्रयाग सङ्गीत समिति, इलाहावादबाट सङ्गीत प्रभाकर गरेको छु।

**अहिले के गर्दै हुनुहुन्छ ?**

डी.ए.भी. स्कुलमा सङ्गीत प्रशिक्षकका रूपमा काम गरिरहेको छु। सङ्गीत सिर्जना गर्नुका साथै एउटा नयाँ एल्बमको पनि तयारी गर्दै छु।

**पहिलो एल्बम 'रेन्ज'पश्चात् के आउँदै छ ?**

आफ्नै नयाँ एल्बमका लागि तयारी गर्दै छु। नाम राखिसकेको छैन।

**सङ्गीत नै किन रोज्नुभयो ?**

पहिलो त आफ्नै कारणले हो। सङ्गीतमा केही गर्न सक्छुजस्तो लाग्छ मलाई र सङ्गीतमार्फत देशका लागि धेरै गर्नु छ जस्तो लाग्छ। हेर्दै जाऊँ, भाग्यले कति साथ दिन्छ।

**गीतसङ्गीतको व्याख्या कसरी गर्नुहुन्छ ?**

सङ्गीत सुनौलो र सुरिलो फरक-फरक आवाजहरूको समीश्रण हो। जसले मानिसलगायत पशुपन्छीलाई समेत आकर्षित गर्दछ र आनन्द प्रदान गर्दछ। गीत एउटा मीठो मेलोडीमा आफ्नो पीर, व्यथा, सुख, दुःखहरूलाई कथा



बनाएर प्रस्तुत गर्ने कला हो। वास्तवमा गीतसङ्गीतले नै मानिसका पीर-व्यथा बिर्साउने, नयाँ काम गर्न हौस्याउने र अर्कै आनन्द दिने गर्दछ।

**तपाईंलाई मनपर्ने गायक-गायिका सङ्गीतकार र गीतकार को-को हुन् ?**

हुन त मलाई सिर्जनात्मक क्षमता भएका गीतकार, सङ्गीतकार, गायक सबै मन पर्छन्। पुराना आफूले सुनेकामा नारायणगोपाल, बच्चु कैलाश, भक्तराज, अरुण थापाआदि विशेष मन पर्छन्। सङ्गीतकारहरूमा नातिकाजी, गोपाल योञ्जन, अम्बर गुरुङ, राजु सिंह, न्ह्यु बज्राचार्य आदि मन पर्छन्।

**गीतकारहरू कोको मन पर्छन् र किन ?**

नेपाली गीतकारहरू प्रायः गायक/सङ्गीतकारभन्दा कम चर्चामा हुन्छन्। कतिमा त लेखकको नामै हुँदैन। नाम सुनेकामा रत्नशमशेर थापा, कालीप्रसाद रिजाल, हरिभक्त कटुवाल, हरि शिवाकोटी, भूपेन्द्र खड्का मन पर्छन्। लेखनशैली, शब्दचयन, यथार्थता झल्किने, प्रेम, प्रकृति र राष्ट्रियता सबै प्रस्तुत भएका गीतरचना मलाई मन पर्छन्।

**पाश्चात्य सङ्गीत र नेपाली परम्परागत सङ्गीतमा के अन्तर छ ?**

हुन त दुवै सङ्गीत परम्परागत नै हो। पाश्चात्य सङ्गीतमा प्राचीन कालदेखि नै मानवसिर्जित सङ्गीतहरू प्रचलनमा थिए। जसमा त्यसैबेलाको नोटेसन पाउन सक्छौं। नेपाली परम्परागत सङ्गीत सामाजिक रूपमा विभिन्न परिवेश तथा जातीय परम्पराहरूमा स्वनिर्मित मौलिक सङ्गीत हो। जसको प्रचलन कहिलेबाट भयो एकिन छैन। नेपाली भएर भन्नुपर्दा नेपाली परम्परागत सङ्गीतहरू पनि अरू कुनै संसारको सङ्गीतहरू भन्दा कम छैनन् जस्तो मलाई लाग्छ।

**तपाइंले पाएका पुरस्कार/सम्मानबारे बताइदिनुहुन्छ कि ?**

मैले पाएको पहिलो पदक राष्ट्रिय शास्त्रीय सङ्गीत प्रतियोगिताको तेस्रो पदक हो, जुन कलानिधि-इन्दिरा सङ्गीत महाविद्यालयले आयोजना गरेको थियो। अरू दुई वटा चैं सिनियर डिप्लोमा र सङ्गीत प्रभाकरको परीक्षामा उत्कृष्ट भएवापत 'मञ्जुश्री सङ्गीत विद्यालय' कालिमाटीबाट प्राप्त भएको हो। मलाई पुरस्कारमा भन्दा प्रतिभामा विश्वास लाग्छ।

# बजारमा उपलब्ध छ ।




अशोक सुवेदीको

सम्पादन / प्रकाशनमा

मार्क्सवादी साहित्य

प्रतिष्ठानको प्रस्तुति

## जनगणतन्त्र र राष्ट्रियताका लागि सिर्जना अभियान

र




हरि शिवाकोटीको

निर्देशनमा निर्मित

म्युजिक भिडियो

## परदेशबाट फर्किएपछि

www.dkcreation.com.np

मा पनि उपलब्ध छन्

